# मिडियाको लागि चुनौती

## नेपालको लोकतान्त्रिक सक्रमणमा



# अर्न्तवस्तु



यो दस्तावेज नेपाली पत्रकार तथा अन्य सहयोगी संस्थाको सहयोग साथै अन्तराष्ट्रिय पत्रकार महासंघद्वारा तयार गरिएको हो ।

## नेपालको लोकतान्त्रिक सक्रमणमा मिडियाको लागि चुनौती


**अवधारणा, रिसर्च, लेखन :** सुकुमार मुरलीधरन, प्रकृती मिश्र, सुरज भट्टराई

**सम्पादकिय र प्रशाासनीक व्याकअप :** Deborah Muir, Claire O'Rourke, Cameron Durnsford



**विशेष धन्यवाद**

गोविन्द आचार्य
कृष्ण अधिकारी
शिवहरी भट्टराई
शिव डोटेल
पन्लालाल गुप्ता
धर्मेन्द्र झा
पोषण के.सि.
चन्द्रदेव कम्ति
नारायण खड्का
तिर्थ कोईराला
अतुल मिश्र
राजेन्द्र नाथ
किरण नेपाल
युवराज विद्रोही
झलक गैरे
विष्णु शर्मा
नागेन्द्र उपाध्याय तथा सम्पुर्ण ल्ँ कार्याशाला गोष्ठिका सहभागीहरु





**डिजाईन तथा मुद्रण :** Impulsive Creations





यस दस्तावेजमा भएको सम्पुर्ण गतिविधि युनेस्कोको समर्थनमा तयार गरिएको हो । विचार र सामग्री IFJ को हो र यसले युनेस्कोको आधिकारीक धारणको प्रतिनिधित्व गर्दैन ।

United Nations Educational, Scientific and Cultural Organization

Organisation des Nations Unies pour l'éducation, la science et la culture

## पृष्ठभूमि

दश वर्षको द्वन्द पश्चात माओबादी विद्रोही संग २०६३ सालमा भएको शान्ति सम्फौता र तत्पश्चात सम्पन्न संविधान सभाको चुनाव संगै देश महत्वपूर्ण परिवर्तनमा प्रवेश गरयो। विशेषतः युद्धविराम र संविधान सभाको चुनाव पछिको यस्तो परिस्थितिलाइ पत्रकार समुदायले वाक स्वतन्त्रता र नागरिको चेतनाको आधारमा, स्वस्थ संचारलाई बढावा दिनका लागि, कानूनी व्यवस्था गर्ने महत्वपूर्ण अवसरको रुपमा लिएको थियो। किनभने नेपालका विभिन्न भागमा क्रियाशील पत्रकार र उनीहरुका संगठनहरुले ज्ञानेन्द्रको निरंकुश शाही शासनले गरेका अन्याय र अत्याचारको विरुद्धमा आन्दोलन गर्न र लोकतन्त्रको पुर्नस्थापना गर्न महत्वपूर्ण भमिका खेलेका थिए। तसर्थ युद्धविराम देखि पत्रकार समुदायले वाकस्वतन्त्रता र संगठन निमार्ण गर्न पाउने अधिकार कानूनीरुपमा सुरक्षित गर्ने लगायत जनताको सूचनाको हकलाई स्थापित गर्न सफलतपूर्वक भूमिका खेलको छन्।

अहिले सम्म भएको सकरातमक परिवर्तन सकंट परे पछि नेपालका पत्रकारहरु र तिनका संगठनहरु स्वतन्त्र संचार तथा शान्ति पुर्न मिलन र जनताको कल्याणलाई सर्बोपरि मान्दै आमसंचार संस्कृति निमार्णको निम्ति एकतालाई बलियो बनाउर्दै आएका छन्।

तर नेपाली पत्रकारहरु केवल सुरक्षा मात्र नभएर ठूला ठूला चुनौतिहरु सामाना गरिरहेका छन्। अपौचारिकरुपमा माआबादी द्वन्द्व अन्त भए पनि यसले हिंसाको संस्कृति र थुप्रै स साना तर खतरनाक सशस्त्र समूहको श्रृजना गरेका छ। राज्य र यसको प्रशासनिक निकायले प्रयाप्त मात्रमा जनतलाई सुरक्षाको अनुभूति दिलाउन सकेको छैन्। त्यतिमात्र होइन कि शान्ति प्रक्रिया संगै राजनीति मूलधारमा आएको माओबादीले पनि, ज्ञानेन्द्रको समयदेखि रहेको गरीब र निम्न स्तरको समुदाय माथि संरचनागत हिंसा, र यस प्रति सम्वन्धित निकायद्धारा गरिएको बेवास्ताको कारणले गर्दा आफूमाथि धोका भएको अनुभूति गरिरहेको छ।

यसरी शान्ति प्रक्रियामा आइरहेको असफलताले मुलुकको दक्षिण भेग, तराइ का अल्पसंख्यक र सीमान्तकृत समूदायमाथि निरन्तर बढ्दै गइरहेको हिंसा र यसले उनीहरुमा ल्याएका पीडाहरुमा देख्न सकिन्छ। वास्तवमा शान्ति सम्फौतका नियमलाई पालाना नगर्नु र अल्पसंख्यक समुदायमाथिको समस्यालाई बेवास्ता गर्नु नै शान्ति प्रक्रियालाई कम आक्नु हुन आउछ । यसैमाथि पनि आर्थिक काठिनाइ र प्राकृतिक दुघट्ना जस्ता घट्नाले यस्तो पीस्थितिलाई गम्भीर बनाउन मद्धत गरिरहेको छ।

विशेषतः गणतन्त्र नेपालका प्रथम प्रधानमन्त्री पुष्प कमल दहाल प्रचण्ड र तत्कालीन सेना प्रमुख रुक्मांगत कटुवाल विचको विवादले नयाँ समस्या उल्फायो। यतिमात्र होइन जन निर्वाचित सरकारले सेना प्रमुख कटुवाललाई पदबाट वर्खास्त गर्ने निर्णय लाई राष्ट्रपतिको हस्तक्षेम पछि तत्कालीन प्रधानमन्त्री प्रचण्डले नैतिकताको कारण देखाउदै राजीनामा समेत दिनु परयो। उनको राजीनामा संगै संसदमा तेश्रो ठूलो राजनीतिक दल नेपाल कम्युनिष्ट पार्टि ए. मालेका माधव कुमार नेपालको नेतृत्वमा नयाँ संयुक्त सरकार निर्माण भयो। तर यो सरकार शुरुकै समय देखि राजीनामा सम्म आउदा एकिकृत माओबादीले गरेको असहयोग, आमहड्तालले तत्कालीन माधव नेपाल सरकारलाई थप्रै बाधा आए। त्यतिमात्र होइन गतिरोधको कारण नयाँ सरकार नहुँदा आज लामो समयसम्म मुलुक सरकार विहिन भएर राजनीतिक अन्यौलता, असुरक्षा उत्पन्न भएको छ। यसको असर आमसंचारमा पनि प्रष्ट देखिएको छ।

शान्ति निर्माणका शुरुको समयमा प्रत्रकारहरु माथिहुने धम्की र आक्रमण केही कम छापामा आएता पनि बढ्दो असुरक्षा र तनाव सँगै आम संचार प्रति लक्षित हिंसा बढ्दै गइरहेको छ। पत्रकारहरुलाई पेशा त्याग्नको लागि निरन्तर धम्की, सम्पादकलाई विभेदमूलक विज्ञापनको मूल्यमा काम गराउनु, साथै उनीहरु माथि त्रास, मनोवैज्ञानिक दबाव श्रृजना गरिएको छ। विशेषगरी दक्षिणतिर रहेको तराई मधेश र मध्य पश्चिमका केहि ठाँउमा संचार र पत्रकारहरुले ल्याएका राजनीतिक परिवर्तन तथा अल्पसंख्यक समुदायको समाचार र विषयबस्तु विरुद्ध उठाएकोले आक्रमण भइरहेको छ। गत २०६४ सालमा केही जिल्लामा पत्रिकामा प्रकाशित समाचार लिएर हिंसा भयो जसको कारणले प्रकाशन समेत बन्द हुन पुग्यो। यस्ता घट्ना हुनुमा प्रकाशित समाचारहरु राजनीतिक र पहिचानका विषयमा भएको ले नभई गलत सूचना सम्प्रेषण र निर्देशन मुख्य जिम्मेवार छन्। तर पनि एउटा स्वीकार्नै पर्ने कुरा के हो भने आमसंचार कुनै राजनीतिक स्वार्थमा संलगन हुन, र नेपाली समाजमा रहेका सबै समुदायका जनताको आवश्यकता, विचार, र संवेदनाप्रति कुनै ध्यान नदिनु हो। संविधाना सभाको







FNJ ले नेपालमा यस रिर्पोटको विषयमा कार्याशालाको एक श्रृंखलाको आयोजना गरेको थियो । जसमा वरिष्ठ पत्रकार तथा मिडियाका सरोकारवालाहरुको माफ गरिएको थियो । विराटनगरको कार्यशाला तथा नगरकोटको गोलमेचमा भागलिनेहरु (फोटोः सुकुमार मुरलीधरन)

चुनावको शुरुमा केही संचारका माध्यहरुले प्रत्यक्षरुपमा राजनीतिकदलका मुखपत्र बन्ने काम मात्र होइन, उनीहरुले जनताको विरोधको आवाजलाई बेवास्ता समेत गरे। त्यति मात्र होइन केही त आफनो विचार इतरका राजनीतिक दलको बारेमा गलत सूचना सम्प्रेषण गर्ने काम पनि गरे।[1]

केही इमान्दार संवेदनशील सचेत पत्रकार र तिनका संगठनहरु, मुलुकभर फैलिएको पत्रकारितामा संलग्न व्यक्तिमा प्रयाप्त तालिम अभाव भएकोमा र शान्त, प्रजातान्त्रिक मुलुक प्रति स्वतन्त्र र निष्पक्ष पत्रकारिताको भूमिकाको सवालमा सचेत नभएकोमा चिन्तित छन्। तालीमअप्राप्त पत्रकार र उनीहरुको अल्पसंख्यकको मानवधिकारप्रतिको असंवेदनशीलता, स्वार्थपूति गर्ने प्रवृति द्वन्द्वलाई बल्फाउने आधार हुन सक्छन्। यस पछाडिको मुख्य कारण भनेको समावेशीपन, नैतिकतामा आधारित उच्चस्तरीय पेशागत तालिमको सीमितता हो।[2]

केही वर्ष यता नेपालमा आमसंचारका विभिन्न क्षेत्रमा तीव्रतर विकास भएको छ। २०६० सालमा ५० वटा भएका एफ. एम. २०६३ सम्म ३०० वटा पुग्यो भने दर्ता गरिएका टेलिभिजन ४ बाट ९ मा पुग्यो। २०६३ सम्ममा दैनिक, साप्ताहिक, अर्धमासिक गरी २६०० पत्रिकाहरु संचालनमा थिए।[3]

## आम संचारको विबरण र पत्रकारितको स्थिति

नेपाल प्रेस काउन्सिलको २००८/०९ वार्षिक प्रतिवेदन अनुसार निम्न लिखित दर्ता गरिएका पत्रिकाहरु थिए।

| दर्ता भएका पत्रपत्रिकाहरुको वर्गीकरण | |
|---|---|
| पत्रिकाका पकार | संख्या |
| दैनिक | ३८६ |
| हप्तामा दुई चोटि | २३ |
| साप्ताहिक | १८७१ |
| दुई हप्तामा एकचोटि | ३२१ |
| जम्मा | २६०१ |

श्रोतः नेपाल प्रेस काउन्सिल वार्षिक प्रतिबेदन सन् २००८/०९

नेपालका केही स्थापित संचार संस्थाका काम गर्नेहरुले पनि व्याबासायिक पत्रकारिता तालिमबाट फाइदा लिन सकेका छैनन् र उनीहरु निर्धारित तलव भन्दा कममा काम गरिरहेका छन्। त्यसै गरी पेशागत सुरक्षाको पनि कुनै ग्योण्टी छैन। श्रमजीवि पत्रकार ऐन अन्तर्गत बनेको तलव निर्धारण समितिले २०६७ मंसीर ८ गते आफनो प्रतिवेदन सूचना तथा संचार मन्त्रालयमा बुझायो। जसअनुसार ३७ ५ पत्रकारहरुले निर्धारित तलव भन्दा कम तलव पाउछन् भने ४५५ नियुक्ति विना काम गर्दछन्। त्यस्तै ४८ ५ आम संचार



पत्रकारहरु प्राय हिंसात्मक भिडमा रहन्छन् जब राजनैतिक दलहरुले आन्दोलन गर्दछन्। (फोटो किरण पाण्डे)

संस्थाले आफना कारिन्दालाई कल्याणकारी कोष औषधी र निवृतिभरणको सुविधा दिएको छैन।

नेपालमा पत्रकारहरुले लामो समयदेखि कडा संघर्ष गर्नुको साथै श्रमजीवि पत्रकार ऐन संशोधनको कुरा उठाउदै आएका छन्। संचार गृहद्धारा विना नियुक्तिपत्र काम गराउने, उनीहरुको सीप क्षमता आभवृद्धिमा गरिएको बेवास्तालाई अन्त गर्नु यसका मागहरु थिए।

२०६२ सालदेखि नेपालमा आमसंचारमा ठूलो फड्को मारेको छ जसले अखवार र श्रृव्य दृश्य संचारका माध्यम ९टेलिभिजन० सम्बन्धि काम गर्नेलाई बढ्दो विज्ञापनको मूल्यले आम्दानीको स्थितिमा व्यापक वृद्धि ल्याएर सहज वातावरण श्रृजना गरेको छ। तथापि रेडियोका संचारकर्मीहरु सहित अधिकांश पत्रकारहरुको स्थितिमा सुधार आउन सकेको छैन।

पत्रकार महासंघ, नेपाल प्रेस यूनियन र नेपालका पत्रकारहरुको राष्ट्रिय संघ जस्ता पत्रकार संगठनहरु के तर्क गर्दछन् भने आनुपातिकरुपमा व्यावासायिक तालिम र कामको लागि स्वच्छ वातावरणको सुनिश्चितता विनाको व्यावासायको विस्तारले शान्ति, पुर्नमिलन र जनताको वृहत्तर हितलाई सहजीकरण गर्ने पत्रकारिता अभ्यासलाई अशक्त बनाउछ। साथै पुर्वाग्रही, गलत, संवेदनहीन समचारले द्वन्द्वलाई उक्साउछ। एक व्यावासायिक पत्रकारकारको लागि अत्यावश्यक यस्ता महत्वपूर्ण विषयवस्तुको बहस विना पत्रकारिताले असहिष्णुता, पूर्वाग्रहलाई बढावा दिन सक्छ। नेपालका पत्रकार संगठनहरुले शान्तिकालागि मुलुकभरका पत्रकारहरु संग मिलेर काम गर्न अत्यावाश्यक भएको बताउछन्। तर पनि त्यहाँ आमसंचारका माध्यमले द्वन्द्वलाई अझ खराब अवस्थामा पूरयाएको धेरै उदाहरणहरु छन्। २०६२ देखि ०६५ विचमा तराइका विभिन्न समूहले जोरजबजस्ती र आतंकको माध्यमद्धारा राजनीति वार्तामा पारेको प्रभावले शान्ति सुरक्षाको अबस्था निकै कष्टपूर्ण भयो। समय समयमा बम विस्फोट हन्थ्यो भने यस्को जिम्मेवारी लिन भूमिगत समूहविच प्रतिस्पर्धा हुन्थ्यो। संविधानसभाको निर्वाचन संगै गुरु मगर लिम्बु र थारु जस्ता विभिन्न समूहरु आफनो जातीय पहिचानको लागि राजनीतिक स्थान लिन उनीहरुको विचार इतरका पत्रकारलाई जोर जवजस्ती धम्की पनि दिइरहेका छन्।

द्वन्द्व पछिको यस्तो अवस्थामा हरेक पत्रकार र आमसंचारका संस्थाहरुले नैतिक मूल्यमा आधारित पत्रकारितको संस्कारका जोड दिनु पर्दछ जस्ले आम जनताको हितलाई जोड दिन्छ। यस्तो प्रकारको पत्रकारिताले समाजमा सवै

1 नेपाल प्रेस काउन्सिल, अभियान २००८, नेपालको संविधान सभाको चुनावको संचार अनुगमनको सार्वजनिक प्रतिवेदन. नोभेम्बर १२, २०१०: http://www.presscouncilnepal.org/files/mmp_book.pdf.

2 फ्रडेरिक एबर्ट स्टिफटुं, २००७.पोलिटिकल, इकोनोमिकल एण्ड सोसल डिभेलोपमन्ट इन नेपाल इन द एअर २००७.इन्टरनेशनल मेडिया सपोर्ट, विल्डिं फर द फयुचरःएन ओभरभ्यू अफ नेपाल्स मेडिया एन्ड रिकमेन्डेबशन फर डिभेलपमन्ट प्राइओरिटिज, इन्टरनेशनल प्रेस फ्रिडम एन्ड फ्रिडम अफ एक्प्रेसन मिशन टु नेपाल, कोपेनहेगन, फेब्रुअरी २००८.

3 भट्टराई बि. २००८."मिडिया रोल इन विल्डिं न्यू नेपाल." द काठमाडौं पोष्ट.काठमाडौं. १९ फेब्रुअरी, फ्रिडम हाउस, २००८.प्रिडिम अफ द प्रेस २००८.(ड्राफट कन्द्री रिर्पोर्ट),अप्रिल २९, २००८.

प्रकारको विचारको उचित र उपयुक्तढंगले प्रतिनिधित्व गर्दछ र द्वन्द्वप्रति संवेदनशील हुनुका साथै जनताको हितलाई केन्द्रमा राखी सकरात्मक र व्यावाहारिक समाधान दिने गर्दछ।

पब्लिक सभिर्स जर्न्यालिज्मले सहिष्णु शान्त र न्यायपूर्ण समाज मानिसहरुको स्वच्छ, सन्तुलित र स्वतन्त्र संचारमा पहुँचमा भर पर्दछ भन्ने सद्धान्तमा आधारमा काम गर्दछ जसले बहुलता, विविधता र मानवधिकार को सम्मान गर्दछ। पब्लिक सभिर्स जर्न्यालिज्मले रचनात्मक सार्वाजनिक संवादमा समाजका सबै समुदायको अवसरलाई सुरक्षित गर्दछ। एउटा संवेदनशील संचारले संवाद र शान्तिका लागि सकरात्कढंगले सहजिकरण गर्दछ। यस्को मुख्य लक्ष भनेको समावेशी, विविधता, सुन्तुलित संचारलाई जोडदिनु हो जस्ले जनताको हितमा कार्य गर्दछ। जातीय विविधता र समावेशी संग सम्वन्धि तनाव, विगतको द्वन्द्वको घाउ र वर्तमान द्वन्द्वका वास्ताविकता, पुर्नमिलन र संक्रमणकालीन न्याय र लोकतान्त्रिक प्रक्रिया सवालमा आएका समाचारहरु मुख्य छन्। यस्ता विषयमा जिम्मेवारी र नैतिकतापूवर्क काम गर्ने पत्रकारहरुले मात्र सहिष्णुता, समम्फदारी एकता कायम गरी द्वन्द्व व्यापस्थापन गर्न सहयोग गर्दछन्। धैरै व्यक्तिले आवाज उठाउनु भनेको आवाज बुलन्द गर्नु हो जसले मानवधिकारकोबारेमा जागरण ल्याउछ। यसबाटे स्वतन्त्र आलोचनात्मक मेडियाबाट समाजले धेरै फाइदा उठाउन सक्छ।

| विकासक्षेत्रका आधारमा प्रकासन | | | | | |
|---|---|---|---|---|---|
| अखबारको प्रकार | पूर्वाञ्चल | मध्यमाञ्चल | पश्चिमाञ्चल | मध्य पश्चिमाञ्चल | सुदूर पश्चिमाञ्चल |
| दैनिक | ७४ | २१६ | ४३ | ३० | २३ |
| हप्तामा दुई दिन | २ | १० | ३ | २ | ६ |
| साप्ताहिक | २६२ | १३२१ | ४८ | ७७ | ६३ |
| दुई हप्तामा | ४२ | २४५ | २९ | ४ | १ |
| जम्मा | ३८० | १७९२ | २२३ | ११३ | ९३ |

समाजका आमसंचार कति जिम्मेवार छ भन्ने कुरा विविध सामाजिक विषयलाई कसरी संचारले कसरी उपयोग गर्दछ भन्नुमा भर पर्दछ। अर्थात जिम्मेवारीपन एउटा राम्रो पब्लिक सर्भिस जर्नालिज्म एक अपरिहार्य सर्त हो। वास्तवमा सामाजिक विविधता यसले प्रयोग गर्ने भाषामा, कर्मचारीमा र अन्य विविध करामा प्रतिविम्वित भएको हुन्छ। मिडियाको विकास भएता पनि सापेक्षिकरुपमा मानव संसाधन विकासमा भएको लापरवाहीले अहिले शहर बजारमा जनघनत्व बढी र सेवा सुविधा पाउन नसकिने क्षेत्रमा मानिसहरुको कम प्राथामिकता हुन्छ। यसैकारणले मेडिया संस्थाले श्रोता वा दर्शकको मागको परिधिभित्र रहनु खच गर्नु पर्ने हुन्छ। साँचै नै नेपाली पत्रकारितामा भएको विकास मध्यमाञ्चल क्षेत्र यसमा पनि काठमाडौं राजधानीमा मा मात्र केन्द्रित भएको छ। यसभन्दा बाहेकमा विराटनगर नेपालको दोश्रो स्थानमा छ। मध्य पश्चिमाञ्चल र सुदूरपश्चिमाञ्चल, जुन माओवादी विद्रोहको उद्गमस्थल मानिन्छ) तुलानात्मकरुमा आमसंचारमा पछाडि छ।

शान्ति सम्फौता पछि भाषाको मुद्धा निकै पेचिलो बनेर आएको छ। नेपाल जस्तो भाषिक विविधता भएको देशमा नेपाली भाषालाई सबै



शाही निरंकुश कालमा कठिन परिस्थितीमा पत्रकाहरु (फोटो विजय राई)

मानिसको साफा भाषाकोरुपमा स्वाकारियो। तर आज सबै जातजाति र भाषा भाषीले आफनो पहिचान र शक्तिमा समान सहभागिता खोजे पछि नेपाली भाषाको श्रेष्ठतामाथि प्रश्न उठ्ने गरेको देखिन्छ। वृहद शान्ति सम्फौता पछि परिचयको खोजी एउटा मान्यता बनेको छ जुनलाई नेपालका मेडियाले व्यवस्थित गर्न खाजेको देखिन्छ। तर छापा त्यो जटिलतालाई समाधान गर्नका लागि एउटा सीमा भन्दा बाहिर जान सक्दिैन किनकि नेपाली भाषा लामो समय सम्म साक्षरताको माध्यम भएको छ। स्थापाना गर्न, प्रसारण गर्न ठूलो पूजी लागत लाग्नृ भएकोले र विद्युत लाइनको अभावले टेलिभिजन प्रसारण खुम्चिएको छ। तर जे होस् रेडियोले विविधताको सम्बोधन गर्नका लागि सबै भाषाभाषीलाई समानरुपमा राजनीतिक संवादको राष्ट्रिय मूलधारमा ल्याउन् ठूलो क्षमता राख्छ।

साना भाषाभाषीहरु संचारका अन्य साधन भन्दा रेडियोमा पुहुँच पुग्न सम्भव हुन्छ किनकि यिनलाई त्यहाँ अबरोध कम छ।

नेपाली आमसंचारका अवलोकनकर्ताहरु के कुरामा विश्वास गर्दछन् भने स्थनीय भाषाको समाचारलाई प्रोत्साहन गर्नु भनेको वास्तविक अर्थमा प्रगति हुनेछ। यहाँ स्थानीयँ भन्ने शब्दलाई नेपालमा विशेष अर्थमा प्रयोग गरिन्छ किनकि राजाको केन्द्रीकृत राज्यको अन्त भइसके पछि नेपालको राजनीति स्थानीय तहबाटनै प्रभावित हुने गरेको छ। नेपाली भाषाको प्रभुत्वले आफनो परिचयमा संकट आएको, आफनो संस्कृति, उनीहरुको जीवन शैली माथि आक्रमण भएको र आफनै भाषा आफैले बोल्न नसकेको परिस्थितिमा स्थानीय भाषाबाट समाचार प्रसारण हुनु निश्चिय पनि सकारात्मक छ।




फोटो पत्रकारहरुलाई जारी दमनको विरुद्ध प्रदर्शन गर्दै (फोटो अमित स्थापित)

यसले उनीहरुको चिन्तालाई दूर गर्ने मात्र होइन यस्ता भाषाको संरक्षण र संवर्द्धन गर्छ। नेपाली पत्रकारिताको चुनौति भनेको सबै आवाजहरुलाई मूलधारमा ल्याई परिवर्तन सुनिश्चित गर्नु हो।

## नेपालमा परिवर्तनका मुख्य राजनीतिक मुद्धाः

स्थानीय समाचार यसतो माध्यम हो जसद्धारा शासकीय संरचनाका विविध प्रकारका दृष्टिकोणहरु प्रशारण गर्न सकिन्छ। आज भाषिक मुद्धा भावी शासनको संरचनाको स्वरुपसंग र विशेषगरी संघीय संरचनामा जनताका इच्छा र आकांक्षासंग जोडिएर बहसकोरुपमा आएको छ। नेपालमा भाषीक पहिचानको खोजी भौगोलिक सीमानाका आधारमा विभाजन गरिएको संघीय संरचनाको सट्टा राजनीतिक विकेन्द्रीकरण भित्र सांस्कृतिक पहिचानकामा केन्द्रीत छ। यो बहसको प्रेरणा तराईलाई मान्न सकिन्छ जसले दक्षिण समथर भूभागलाई भौगोलिक भन्दा पनि सांस्कृतिक पहिचानकोरुपमा एक मधेश एक प्रदेशको नाराद्धारा स्वायत्त राजनीतिक इकाइकोरुपमा हुनु पर्छ भनेर दाबी गरयो। यो माग कुनै समयमा अन्य भूभागमा बस्ने मानिसहरुको लगि पूरा सिंगो तराई प्रदेशलाई स्वायत्त घोषणा गरी दक्षिण भारतसंग विशेष आर्थिक सम्बन्ध जोडेर मध्य र उच्च पहाडी क्षेत्रलाई बर्बादी तर्फ धकेल्ने पो हो कि भन्ने ठूलो चिन्ताको विषय बनेको थियो।

भाषाको आधारमा संघीय संरचना पनि एक वैकल्पिक प्रस्तावको रुपमा आएको छ। एकल र एकात्मक मधेश सबैको लागि त्यति स्वीकार्य हुन सक्दैन किनकि राजनीतिक पहिचानकोरुपमा धरै नभए पनि तीन वटा पहिचान छन्। त्यस्तै भाषागत संरचनाका दृष्टिले पनि यो एक भन्दा कम्तिमा तीनवटा प्रदेश बन्न संभव देखिन्छ किनभने त्यहाँ मैथली, भोजपुरी र अवधी गरी तीन प्रतिनीधिमूलक भाषा अस्तित्वमा छन्।

नेपाल वास्तवमा बहुजातीय मुलक हो। सन् २००१ को जनगणना अनुसार काठमाडौं जिल्लामा मात्र ९७ वटा जातजातीहरु बसोबास गर्दछन्। सबैभन्दा कम जातजाती बसोबास गर्ने जिल्ला कालीकोटमा समेत ३४ वटा जाती छन्। त्यस्तै समग्र देशको तथ्यांकलाई हेर्दा यहाँको जातीय विभिदता ९३.४ प्रतिशत हुन आउँछ।[4]

सन् २००१ को जनगणना अनुसार नेपालको १४ जिल्लाहरुमा अत्यधिक उच्च, २९ जिल्लाहरुमा उच्च जातीय विविधता छ। र अरु १८ चाँहि सामान्य विविधता भएका जिल्लाहरु हन्। यसरी हेर्दा मात्र ६ वटा जिल्लाहरुमा जातीय विविधता कम छ।

नेपाली भाषालाई राष्ट्रिय भाषाकोरुपमा संरक्षित गरिएको छ जुन यसमा सरकारी कामकाज गरीन्छ। त्यस्तै अँग्रजी भाषालाई शिक्षामा प्रोत्साहान गरिएको छ। २०४७ सालको संविधानमा राष्ट्रभाषाको बारेका व्यबस्था गरिएको थियो जसले भाषिक विविधतालाई मान्यता दिन्छ। तर विविधताको मान्यता आमसंचारमा रुपान्तरण हुन सकेको छैन। तालिकाले के कुरा स्पष्ट गरेको छ भने छापा संचारमा नेपाली भाषा प्रमुख छ भने अँग्रेजी भाषा प्रकासनमा दोश्रो स्थानमा छ।

विभिन्न भाषाहरु मध्येमा मैथली भाषा नेपाली भाषा पछिको सबैभन्दा बढी बोलिने भाषा हो। तर पनि प्रकाशनको सवालमा भन्नु पर्दा यसलाई मध्यम मान्न सकिन्छ। नेवारी भाषा भने यसको आफनो समृद्ध इतिहाँसको कारण प्रकाशनको क्षेत्रमा विशिष्ट पहिचान बोकेको छ। राज्यद्धारा संरक्षित रेडियो नेपालले सन् १९९०मा नै हिन्दू र नेवारी भाषामा समाचार प्रसारण गरयो।

तर पनि देशको सबै भेगमा बुझ्न सकिने हुनाले आमसंचारले नेपाली भाषालाई मुलुकभर सम्पर्क माध्यमकोरुपमा प्रयोग गरिएको छ। तर अरु साना साना भाषाका आम संचारको प्रभावहिन उपस्थिति उनीहरुमा पीडा बोध भएको हुन सक्छ।

हालका वर्षहरुमा रेडियो प्रसारण सशक्त ढंगले भाषिक विविधतालाई सम्बोधन गरेको छ। समाचार र मनोरञ्जन दुबैमा देशका विविध भाषा मैथली, भोजपुरी, थारु, लिम्बु, मगर, भाषामा प्रसारण भएकोले रेडियोले उल्लेख्यमात्रमा श्रोतालाई आकर्षण गरेको छ। फोन इन जसता कार्यक्रमले सारक्षर र निरक्षर दुबैलाई सहाभागितामूलक मञ्च प्रदान गर्दछ। आर्थिक श्रोत तथा साधनले सहजता ल्याए जस्तै बाधा पनि हुन्छ जुन हरेक समाजमा समस्याकोरुपमा रहेको हुन्छ।

भाषामा भएको राजनीतिक विवादको उत्तम नमूना उपराष्ट्रपति परमानन्द झाको हिन्दीमा लिएको सपथलाई लिन सकिन्छ। संवैधानिक व्यवस्था नभएको हुनाले यसलाई राजनीतिक आन्दोलन संग जाडेर सिंगो मदेशलाई एक भाषा अन्तर्गत परिचय दिनराजनीतिक आन्दोलनको रुपमा मान्न सकिन्छ। उप राष्टपतिको शपथलाई अवैध घोषणा गर्दै सर्वोच्च अदालतले उनलाई मान्यताप्राप्त भाषामा पुनः शपथ लिन आदेश दियो। काठमाडौंका मेयरले नेवारी भाषामा शपथ लिए। यो उप राष्ट्रपतिको हिन्दीमा लिएको शपथ जस्तै विवाद नभएपनि यसले भाषामाथिको राजनीतिक बहसलाई संकेत गर्दछ।

4 पिताम्बर शर्मा, अनरयाभेलिं द मोजाइकः स्पासियल आस्पेक्ट अफ एथ्निसिटी इन नेपाल, हिमाल बुक्स फर सोसल साइन्स बाहा, काठमाडौं२००८, भाग ३.

| भाषाका आधारमा प्रकाशन | | | | | |
|---|---|---|---|---|---|
| ऋखवारका प्रकार | दैनिक | हप्तामा दुईचोटी | साप्ताहिक | दुई हप्तामा एकचोटी | जम्मा |
| भेजपुरी | | | १ | १ | २ |
| अँग्रजी | २१ | | ४९ | २५ | ९५ |
| हिन्दी | ४ | | ६ | | १० |
| हिन्दी अवधि | | | १ | | १ |
| लिम्बु किराँती | | | | | ० |
| मैथली | १ | | ४ | | ५ |
| नेपाली | ३३७ | २१ | १६४५ | २१८ | २२२१ |
| नेपाली अँग्रजी | १२ | १ | ११२ | ५५ | १८० |
| नेपाली अँग्रजी हिन्दी | | | ८ | ७ | १५ |
| नेपाली अँग्रजी मैथली | १ | | | | १ |
| नेपाली अँग्रजी मैथली हिन्दी | १ | | ३ | | ४ |
| नेपाली अँग्रजी नेवारी | | | ७ | १ | ८ |
| नेपाली अँग्रजी संस्कृत हिन्दी | | | ३ | १ | ४ |
| नेपाली अँग्रजी थारु | | | | १ | १ |
| नेपाली अँग्रजी टिबेटन | | | १ | २ | ३ |
| नेपाली हिन्दी | १ | १ | ७ | १ | १० |
| नेपाली जापानीज | | | | १ | १ |
| नेपाली मैथली | २ | | ४ | २ | ८ |
| नेपाली मारवाडी | | | १ | | १ |
| नेपाली नेवारी | | | २ | १ | ३ |
| नपाली तामाङ. | | | १ | १ | २ |
| नेवारी | ५ | | १२ | १ | १८ |
| थारु | १ | | ४ | १ | ६ |
| अन्य | | | २ | २ | ४ |
| जम्मा | ३८६ | २३ | १८७३ | ३२१ | २६०३ |

पब्लिक सर्भिस जर्नालिज्मको विकास स्पष्टरुपमा अघि देखिनै देखा पर्न थालेको थियो विशेषत: नेपालको एउटा प्रमुख अँग्रजी दैनिक पत्रिकाले प्रकाशित गरको ददेशका दशै सम्बन्धि अक्टुबर २०१० समाचारमा यसतो पत्रकारिता स्पष्ट देखिन्छ। मुख्यरुपले हिन्दु धर्मालम्बीहरुले मानाउनजे यो राष्ट्रिय चाडलाई नेपालका अन्य धार्मिक समुदायले पनिभ श्रद्धाले हर्ने गर्छन। सन् २०१० अक्टुबर ९ का दिन उक्त दैनिकी पत्रिका प्रथम पृष्टमा प्रकाशित बेपत्ताका परिवारमा दशैले खुशी ल्याउन सकेन शीर्षकको समाचार अनुसार:

> द्वन्दमा अफना पारिवारक सदस्यहरु बेपत्ता पारिएकाहरुका परिवारहरुले उनीहरुको अबस्थाको बारेमा अफ्त पनि जानाकारी पाएका छैनन्। उनीहरुका परिवारले लगातारररुपमा आफना परिवारिक सदस्को जनाकारी पाउनु पर्ने आवाज उठाए पनि कतैबाट सुनुवाइ भएको छैन।
>
> देश संघीय गणतन्त्र घोषणा भएको ३ वर्ष भएपनि राज्यद्धारा वेपत्ता पारिएका नागरिकहरुको जानाकारी सार्वजनिक गरेको छै न। त्यसै गरी माआवादीले आफना तर्फबाट बेपत्ता पारिएका नाागरिकहरुको पनि जानाकारी उपलब्ध गरिएको छैना।[5]
>
> राज्यले आफनो उत्तरदायित्वबाट बिमुख हुनका साथै माओबादीहरुले विस्तृत शान्ति सम्फौतामा गरेका बाचाहरु पूरा गर्न असफल रहँदा नेपालको गणतान्त्रिक रुपान्तरणमा एउटा डरलाग्दो छाँया देखा पर्दै आएको छ। स्वतन्त्र अनुसन्धानहरुले के देखाएका छन् भने लाकतान्त्रिक रुपान्तरणमा जनाताको विश्वास त्यति बेला बढाउन सकिन्छ जति बेला पूर्व शाही नेपाली सेना आहिलेको नेपाली सेना तथा माआबादी हरुले गरको विगतका गल्तीहरुलाई न्यायपूर्वक अथवा जिम्मेवारी पूर्वक सम्बृधन गर्न सकिने छ। युद्धकालमा भएका मानवधिकार हनन् तथा दण्डहिनताका विरुद्ध एकदमै थोरै मात्र कारबाही हुने गरेको देखिएको छ। मानिसहरु कसैले प्रतिशोधको भावाना लिने हो कि भनी ठूला अपराधहरुको अनुसन्धानको लागि दबाब दिन डराउछन्। मानवधिकारबादीको वकालत गर्ने संथा ह्युमन राइट वाचले यसता गतिविधिलाई देशले अन्तराष्ट्रियकानूनको पालना गराउन नसक्नाल देशको राजनीतिक तथा समाजिक विवाद रहिरहनु परेको अवस्थामा लिएको छ।[6]



नोभेम्वर २००७ मा विरेन्द्र शाहको अपहरण पछिको हत्याको विरोधमा प्रदर्शन गर्दै (फोटो अमित स्थापित)

सन् २०१०को जनवरीमा इन्टरनेशनल काइसिस ग्रुपले प्रकाशित गरेको प्रतिवेदन त अफ आक्रमक थियो। राजनीतिक पार्टीहरुले आफना पहिलेका विगतका गल्तीहरुलाई सच्चाउन कुनै कदम चाल्न चाहादैनन्। प्रतिबेदनमा भनिएको छ। : वास्तवमा पाद्विहरुले गैह्रजिम्मेवारढंगबाट

5 "फेस्टिबल फेल टु ब्रिं जोइ टु द फयामेली अफ डिसअपिअर्ड",द राइजिं नेपाल, अक्टोबर९, २०१०,पेज १.

6 ह्युमान राइट वाच एण्ड एड्भोकेसी फोरम, २००८. वेटिं फर जस्टिसः अनपनिष्ट क्राइम फ्रम नेपाल्स आर्म्ड कन्फिलिक्ट.हयु.रा.वा.हेर्नु हेइस्लबर्ग, एस. एट.अल.२००७."एन इन्क्लिूसिभ पिस प्रो्सेस इन नेपाल एण्ड द रोल अफ द इ.यू." क्राइसिस म्यानेजमेन्ट इनिसियटिभ. डिसेम्बर २००७.

आफना कार्यकर्ताले गरेका अवैधानिक कार्यबाट जोगाउनुको साथै अपराधहरुको न्यायिक छानविनमा हस्तक्षेप गरिरहेका छन्। यस्तो अवस्थामा आइ. सि. जी. को प्रतिवेदनले एक हजार भन्दा बढी परिवार जस्का सदस्यहरु बेपत्ता पारिएका छन् उनीहरुमा दुःख नैराश्यता तथा धोका पाएको महशुश गरिरहेको उल्लख छ।[7]

दण्डकिनतालाई रोक्न नसक्नुले मानवधिकार हननका घट्ना संक्रमणकालभरि व्याप्त रहेको देखाउछ। सम्बोधन नगरिएका विगतका पीडाहरुले समुदायलाई असम्भव माग राख्न बाद्य पार्दछ जसले मानिसहरुको विचको सम्बन्धलाई धरापमा पार्दछ। यसको उदाहरणको रुपमा थारु समुदायले मध्य पश्चिमी र सुदूर पश्चिमी क्षेत्रमा राखेको थारु स्वायत्त क्षेत्रको मागलाई लिन सकिन्छ। तुलनात्मकरुपमा अन्यभन्दा गरीब थारु समुदाय तत्कालीन शाही नेपाली सेना र माआबादी विद्रोहीहरु आतंक तथा हत्याको शिकार बन्यो। आइ.सी. जी. ले उल्लेख गर अनुसार थारुहरुको बाहुल्य रहेको मध्य पश्चिमको बर्दिया जिल्लाका २०० जना मानिसहरु बेपत्ता पारिएको तथ्यांक छ। अफ्र पनि सेना जो यसको तथ्यांक छ, युद्धविराम भए यता अपराधलाई ढाकछोप गर्नुका साथै अनुसन्धानमा सहयोग गर्न अस्वीकार गर्दै आइरहेको छ।[8]

जबसम्म मानवधिकारका दाषीहरु उम्की रहन्छन् तबसम्म दायित्व सहितको शान्ति र पुर्नमिलन असम्भव हुन्छ। जहाँसम्म थारु समुदायको राजनीतिक आधकारकोरुपबाट आएकाके थारु स्वायत्त प्रदेशको मागको कुरा छ, त्यो विगतमा उनीहरुको न्याय आधिकार कुण्ठीत गर्नुको परिणाम हो। माथि गरिएको त्यसतै विगतको गल्तीलाई सम्बोधन नगर्ने हो भने भविष्यको स्वच्छ समतामूलक समाज प्राप्त गर्न असम्भव छ।

थारु समुदायले उठाउदै आएको स्वायत्त प्रदेशमाथिको विवादले श्रृजना गरेका तनाबले अक्टुबर ८, २००८ मा जे.पी. जोशीको अपहरण र हत्या निम्त्याएको ठानिन्छ। माओबादीका विचार प्रधान पत्रिकाका जनदिशाका सम्पादक जोशीको अवशेष फ्रण्डै ५० दिन पछि मात्र भेटिएको थियो। आधिकारिक श्रोतका अनुसार मध्यपश्चिम र सुदुर पश्चिमलाई थारुस्वायत्त प्रदेशप्रति पाटिको समर्थन सम्बन्धमा पार्टिका स्थानीय नेता संग फ्रगडा भएको थियो।

माओबादी नेतृत्वले भने उनको मृत्युको आरोप अस्वीकार गरेको छ तर पनि यस घट्नामा पार्टिका कुनै व्यक्ति घटनामा संलग्न हुन सक्छ भन्ने कुरा नकारेनन्।[9] नेपाल पत्रकार महासंघले आफनो अध्ययन अनुसन्धान पछिको प्रतिवेदनमा जोशीको हत्या पछाडि माओवादीसंग सम्बन्धित केही व्यक्तिको हात रहेको घोषणा गरेको छ।

द्वन्द्व समयमा मानवधिकार उल्लंघन जस्तै जोशीको हत्या अनुसन्धानमा पनि दण्डहिनता देखिएको छ। जोशी हत्याको १५ दिन भित्र सत्य तथ्य छानवीन गर्ने भनेर एउटा समिति निर्माण गरियो। तर ताकिएको समयमा प्रतिवेदन दिन भन्दा पनि बारम्बर यसको म्याद बढाएर २००९मा मात्र यसले प्रतिवेदन पेश गरयो। यसलृ पत्ता लगाएका सत्य तथ्य बाहिर आउन अफ्र बाँकी भएता पनि पत्रकार महासंघका सचिव राम्जी दाहालले सूचनाको हकको आधारमा अनुसन्धान गर्न बनाइएको समितिले बसाई र मोबाइल खर्च समेत गरि ४०,१०० अमेरिकी डलर खर्च गरेको कुरा हिमाल खबर पत्रिकाबाट बाहिर ल्याए। तर त्यति बेला सम्म जोशीका परिवारले कुनै पनि आर्थिक सहायता प्राप्त नगरेको कुरा खुलासा भयो। त्यसपछि नेपाल सर कारको मन्त्रिपरिषदको तत्काल बैठक बसी जोशी परिवारलाई १५ मिलियन ने.रु, २००५० अमेरिकी डलर प्रदा गरयो। र उनको हत्याको अनुसन्धानको लागि बनेको समितिलाई सन् १९९१ को संविधान अन्तर्गत बनेको आख्तियार दुरुपयोग अनुसन्धान आयोगमा सिफारिस गरियो र विस्तृत शान्ति सम्फौता र राष्ट्रिय पुर्न मिलनको मर्म अनुसार काम गर्ने अपेक्षा गरियो।

बेपत्ता, गैह्रन्यायिक हत्या विगतमा भएको द्वन्द्वदेखि नै भएको एक पक्षीय गल्ती हो। आन्तरिक विस्थापन युद्धकाल पछिको सबै भन्दा ठूलो चुनौति हो। विस्तृत शान्ति सम्फौता र राज्य दुबैद्वारा कब्जा गरिएका घर जग्गा र सम्पत्ति सम्वन्धित व्यक्तिलाई फिर्ता गर्ने सहमति भएको छ। त्यस्तै विना आग्रह र पूर्वाग्रह विना विस्थापित मानिसहरुलाई आफनो पुर्ख्यौली घरमा फर्किन दिने र भत्किएका संरचनाहरु निर्माण गर्ने दिने, पुर्नस्थापना हुन पाउने आफन्त मिल्न पाउनु भनी सम्फौता गरिएको छ।[10]

आन्तरिक विस्थापितहरुलाई पुर्नस्थापित गराउने नीति सन् २००७ दखिनै लागू गर्न शुरु गरिए पनि रेर्कडमा पुर्नस्थापन र प्रत्यास्थापन गर्ने का म शुन्य छ। २०१० जनवरीमा प्रकाशित एक प्रतिवेदन अनुसार नेपाल सरकार र माओवादी ले दश वर्षे द्वन्द्व अन्त भएका ३ वर्ष पछि पनि ७०,००० भन्दा बढी विस्थापित मानिसहरु आफनो घरमा फर्कन असक्ष र अनिच्छुक छन्। मुख्यरुपमा अहिले भैरहेको राजनीतिक संकटले शान्ति प्रक्रियामा र पुर्नमिलन र विस्थापनको दीर्घकाली समाधानलाई असर पारिरहेको छ। माओवादीले जफत गरिएका घर जग्गा फिर्ता गर्ने प्रतिबद्धता बाराम्बर दाहोरयाए ता पनि धेरै जिल्लामा घर जग्गा फिर्ता हुन बाँकी नै छ। सरकारले बनाएको प्याकेज कार्यक्रम केवल कागजमा मात्र सीमित छ भने कतिपय जिल्लामा त आधा भन्दा बढी आन्तरिक विस्थापितहरु राहतको लागि नाम दर्ता समेत गर्न सकेका छैनन्।[11]

द्वन्द्व कालमा घर जग्गा कब्जाको समाचार लेख्न भनेको जोखिमपूर्ण मात्र होइन् धेर बढी समय। सन् २००९, जनवरी मा जनकपरमा गरि एको उमासिंहको हत्याले यही पुष्टी गर्दछ। उमासिंहले माआवादीले कब्जा गरेको जग्गाको थप्रै सूची संकलन गरेकी थिइन। युद्ध विराम र लोक तान्त्रिक सरकारको आगमन सँगै कब्जा गरिएका घरजग्गा फिर्ता गर्नको लागि जनस्तरबाट दबाब पनि प्रयाप्त थियो। यो नै शान्ति प्रक्रिया र पुर्नमिलन प्रक्रियाको एउटा महत्वपूर्णा कडि थियो र वैधानिकरुपले भूमीसुधार गर्नको लागि पनि। माओवादीको नेतृत्वमा रहेको सरकारले औपचारिक रुमा राष्ट्रिय पुर्नमिलनको प्रतिबद्धता व्यक्त गरयो र साथै जफत गरिएका घरजग्गा आवश्यक सबै निर्देशन जारी गरयो। तर यसले आफनो आदेश स्थानीय स्तरमा सबै कार्यकर्तालाई लागू गराउन सकेन।

सन् २००८ अक्टुबरमा सरोकार नामको नेपाली पत्रिकामा उमा सिंहले

7 इन्टरनेशनल क्राइसिस ग्रुप, "नेपाल पिस एण्ड जस्टिस", एसिया रिर्पोट नं १८४, जनवरी २०१०, पेज १.

8 उही पेज नं ७

9 "माओइस्ट माइट ह्याभ ह्यान्ड इन जे.पी जोशी मर्डरःमिनिस्टर", रिपब्लिका, डेटलाइनःजनवरी ३०,२००९, एक्सेस्ड अन नोभेम्बर १२, २०१० http://www.myrepublica.com/~myrepub/portal/index.php?action=news_details&news_id=1531

10 कम्प्रहेन्सिभ पिस अग्रीमन्ट.नेभेम्त्रत्र २००६, प्याराग्राफ ५,१,८, र ५,२,८,

11 इन्टरनेट डिसप्लेसमन्ट मोनिटरिं सेन्टर एण्ड नर्वेजिएन रिफयुजी काउन्सिल, "नेपालः फेल्ड इम्प्लेमेन्टेसन अभ आइ. डि. पी. पोलिसी लिभ्ज मेनी अनस्याटिस्फाइड", पेज १, एक्द्टयाक्टेड अन नोभेम्बर १२, २०१० http://www.internal-displacement.org/8025708F004BE3B1/%28httpInfoFiles%29/FFF5958EB13C0AF8C12576B900395E1D/$file/Nepal_Overview_Jan10.pdf.





पत्रकार उमा सिंहको महान र आन्तरीक विस्थापितको पिडा भन्ने विषयमा लेख लेखेकै कारण जनबरी २००९ मा जनकपुरमा हत्या भयो । (फोटो विकास द्वारे र सुकुमार मुरलीधरण)

एउटा समाचार लखिन: माओवादीद्धारा कव्जा गरिएको जग्गा माओवादी अध्यक्ष अर्थात प्रधानमन्त्री पुष्प कमल दाहाल प्रचण्डले आफना कार्यकर्तालाई कब्जा गरिको जग्गा फिर्ता गर्ने आदेश दिएको तीन महिना भइसक्दा पनि सिराहामा द्वन्द्वकालमा कब्जा गरिएको १२०० बिगाहा जमिन अझैपनि माओवादी नियन्त्रणमा छ।[12]

उनले कब्जा गरिएका घरजग्गाको लामो विवरण र त्यसबाट प्रभावित व्यक्तिको संख्या पनि राखेकी थिइन। उनको अभियानमूलक पत्रकारिताको के आशय थियो भनेः सामान्यतया तराईका र विशेषतः धनुषामा जसका घर जग्गा कब्जा गरिएका छन्, विस्थापित गरिएका छन् उनीहरुलाई न्याय दिलाउनू।

त्यो उक्त लेखमा उनले तराईमा माओवादी पार्टिका, वरियातक्रले ठूला नेताको नाम दिइन र जो आफनो पार्टिको कार्यनीति र रणनीतिसंग फरक मत रहेकोले उनी पार्टि त्यागे। उनका अनुसार ती नेताले सरकार र पार्टी दुबैको निर्देशनलाई अवज्ञा गर्दै जग्गा कब्जालाई निरन्तरता दिदै गए। उनले युद्ध विराम र नयाँ लोकतान्त्रिक नेपालको मूल मर्मलाई बेवास्ता गरेका थिए।

उनी भूमि सुधार मन्त्रालाय संग सम्बन्धित भएर समाजका पिछिडिएका समुदायलाई जग्गा कब्जा गररेर बस्न उत्प्रेरित गरे। यही कारणले मन्त्रीमण्डलका उनका सहकर्मीहरु पनि उनी संग रुष्ठ थिए र विशेषतः गृहमन्त्रालय किनकी गृहमन्त्रालायको कामदेशमा नियम कानूको रक्षा गर्नु थियो। भूमि सुधार मन्त्रीले बारम्बार प्रधानमन्त्री र मन्त्री परिषदको निर्देशनलाई बेवास्ता गरेका थिए।

अन्तवार्ता र प्रयाप्त प्रमाण सहित आफनो सामाचारमा के लेखिन भने यो जर्बजस्ती जमीन कब्जा गर्ने कुनै विचार विनाको राजनीतिक अभियान हो। अत्यन्तै अमानवीय यो कार्य जर्वजस्तीको अर्को नमूना हो। वास्तवमा ति व्यक्ति र परिवारहरु माआवादी गुरिलाबाट मन्त्रीबनेकालाई आफनो जग्गा कब्जा हुनबाट जोगाउन उनीले माग गरे जति पैसा दिईरहेका थिए।

यी सबै सूचनको आधारमा उमा सिंहको हत्याको कारण पत्रकारिता बन्न पुग्यो जसद्धारा उनले कब्जा गरिएको घरजग्गाको बारे मा सधैं लखिरहिन् र तिनको प्रत्यास्थापनको निम्ति लेखिरहिन्। उमा निडर साहसी थिइन् जसले माओवादी द्वन्द्व अन्त संगै तराइमा उम्रिएका संशस्त्र हतियारधारी समूहको बारे मा लेखिरहिन् जुन समूह दक्षिणको छिमेकी भारतको सीमानालाई छिप्ने स्थान बनाएर जनजीवन कष्टमय बनाइरको छन्। उनले महिला पत्रकारले भाग्नु परेका समस्याको बारेमा सचेततापूर्वक उठाइरहिन्। दृढ विश्वास, आस्था र साहसले गर्दा धेरै महिलाको प्रेरणाको श्रोत बनिरहिन्। त्यसैले सन् २००६ देखि थुप्रै उत्साही महिलाहरु पत्रकारिताका प्रवेश गरे।[१३]

अर्की महिला पत्रकार टिका विष्ट, नेपालको मध्य पश्चिमाञ्चल क्षेत्रको रुकुम जिल्लामा डिसेम्बर २००९ मा सांघातिक आक्रमण गरियो। विष्टले एउटा लेख लेखे पछि माओवादीद्धारा धम्की आयो र त्यसको ठीक एक महिना पछि नकावधारी व्यक्तिहरुले उनीमाथि आक्रमण गरे। उनको हात खुटामा चक्कुले चिरेर भिरबाट फयाँकिएको थियो। भाग्यवस उनका साथीहरुले खोज्दै जाँदा भेटाए र तरुन्तै उपचारको लागि काठमाडौमा ल्याइयो।

केही दिन पछि प्रहरीले माओवादीको भातृसंगठन वाइ.सि.एल.का पाँच जना नेतालाई पक्रियो। त्यसको केही दिन पछि वाइ.सि.एल.का केन्द्रीय समितिमा आबद्ध अरु पाँच जना लाई पक्राउ गरियो। साथै अनुसन्धानको लागि अन्य स्थानीयलाई समेत सोधपुछ गरियो।

तराइको अर्को समस्या पहाडबाट तराईमा बसाइ सरेरका बसेकाहरु र तराइका रैथाने विच भएको तनाव त्यसले संचार स्वतन्त्रतामा हानी पुरयाइरहेको छ। वरिष्ठ पत्रकार रमेश घिमिरेले) जो ४८ वर्ष देखि आफनो पेशा गर्दै आएका थिए) तराई भूमिमा सक्रिय रहेका सशस्त्र समूहबाट उनलाई धम्की आउन थाल्यो। धनुषा साप्ताहिकका सम्पादक घिमिरेलाई अपरिचित मानिसले किन तराईभूमिकम नेपाली पत्रिका चलाएको भनी फोन आउथ्यो। एक चोटि २००९ फेब्रुअरी मा आई.एफ.जे.को बैठकमा घिमिरेले आफुलाई बारम्बार धम्की आएको कुरा बताए। वर्षौदेखि पत्रकारिता गरेर आएका घिमिरले जनकपुरमा नेपाली पत्रिका प्रकाशन गर्दा त्यहाँका मानिसहरु चिढिन्छन् भन्ने कुरा उनलाई विश्वासनै लागेन। बारम्बारको धम्की र चतावनीको कारण आफनो परिवारलाई जनकपुरबाट उठाउन बाध्य हुनु परयो। आफभने आफनो पेशालाई निरन्तर अगाडि बढाई रहेका छन्।

पत्रकारमाथि आक्रमण हुनमा अदृश्यरुपमा राजनीतिक दबाबले काम गरिरहेको देखिन्छ। उदाहरणकोरुपमा सेप्टेम्बर २०१० मा सुदूर पश्चिमको महेन्द्रनगरका स्थानीय माओवादी नेताले सार्वजनिकरुपमा नै पप्पु गरुड को

12 यो जमिनको कर नाप्न प्रयोग गरिने इकाई हो जुन प्रत्येक जमिनको मालिकहरुले तिर्नु पर्ने हन्छ। यो जमिनको गुणात्मक तथा अन्य तत्वले फरक पार्दछ।

13 फ्रिडम फोरम मिसनद्धारा तयार पारएको उमा सिंहको हत्याको पृष्ठभूमि र परिस्थिति सहितको प्रतिवेदन जसले नेपालमा २००९मा भेटेको थियो। हर्नुहोस् ए कल टु इन्ड भाइयोलेन्स एण्ड इम्प्युनिटी, इन्टरनेशनल प्रेस फ्रिडम एण्ड फ्रिडम अभ एक्प्रेसन मिशन टु नेपाल, फेब्रुअरी २०० ९, कन्द्दयुव्युटेड बाइ आइ. एफ.जे. एण्ड प्रकासित इन्टरनेशनल मेडिया सपोर्ट, कोपनहेगन, पेज ३२_८, अन नोभेम्बर १२, २०१०: http://www.i-m-s.dk/files/publications/1453%20Nepal.web.pdf.



पत्रकार तिवारी, वोहोरा र घिमिरेलाई स्थानिय माओवादी नेतृत्वले आफ्नो कार्यकर्ताको अपहरणमा उनिहरुको हात भएको आरोप लगाएको थियो । (सुकुमार मुरलीधरण)

अपहरणमा तीनजना पत्रकारको सलग्नता छ। आरोपले ठूलो हंगामा मच्चायो किनकि तीनैजना पत्रकार कर्ण बोहारा, युवराज घिमिरे र लक्ष्मण तिवारी लामो समय देखि पत्रकारितामा सेवा गरेका र आदरणीय मानिन्थे। कहि दिन पछि नेपाल पत्रकार महासंघको बैठकमा माओवादी नेतृत्व नरम देखिए पछि पत्रकारहरु के कुरा स्वीकार गर्न तयार थिए भने गुरुको अपहरण पछि माओबादीको हात छ भन्ने कुरा गलत थियो।

यस्ता परिस्थितिलाई पत्रकार महासंघले तत्काल हस्तक्षेप गरी नियन्त्रणमा लिए पनि त्यसको भित्रि तनाव भने रहिरहन्छ। धरैजसो अध्ययनले के पुष्टि गरेको छ भने स्थानीय पत्रकारहरुलाई आरोप माओवादीबाट आउने गरेको र उनीहरुले आफूमाथि आएको दोषबाट बच्नको लागि यस्तो गरेका छन्। यसतो जे.पी. जोशी र प्रकाश ठकुरीको हत्यामा पाइयो।

विस्तृत शान्ति सम्झौताकामा के थियो भने नेपाली सेना र माओवादी दुवैले आधारभूत काम जस्तै सीमा सुरुक्षालाई कायम राखी हातहतियार लाई पूर्णतया बन्द गर्ने छन्। यसरी नेपाली सेनाको लोकतात्रिकरण, नागरिक शासन प्रति बफादार बन्ने संस्कृति सहित निशस्त्रीकरण, सुरक्षा क्षेत्रको सुधार जस्ता काम हुनु पर्दथ्यो। यसतै जनमुक्ति सेनालाई रुपान्तरण गरी नेपाली सेनामा समायोजन गरी उपयुक्त नियन्त्रण निर्देशनमा राखिनु पर्थ्यो।

शान्ति पक्रिया शुरु भए यता पत्रकार प्रति जनताको धारणामा व्यापक परिवर्तन आएको छ। पहिला सेनलाई राम्रो तवरले हरिदैनथ्यो। पुरानो शाही नेपाली सेना राजतन्त्रको सुरक्षा ढाल बनेर बसेको थियो र माओबादी विद्रोह देखिनै मानवधिकार उल्लंघनमाका घट्नामा मुछिएको थियो। संविधान सभाको चुनाब पछि र माओवादी संविधान सभाको ठूलो पार्टि भएर आए पछि संचार प्रतिको धारणा पनि बदलिएको छ। संसदमा ठूलो पर्टि भएर आए पछि माओवादी सेना निशस्त्रीकरण भए तर सैन्य विघटन हुन सके न त्यसैले माओवादी लोकतान्त्रिक रुपान्तरणमा असंगतिको रुपमा देखा पर्न थाल्यो। आई.सी.जी.को अगस्त २००९ को प्रतिवेदनले के भन्छ भने माओवादीको वास्ताविक शाक्ति सहितको कानूनी शक्तिले विपक्षीहरुलाई त्रसित बनाइएको छ।[14]

नेपाली मेडियामा केही डरहरु प्रति विम्वित भएको छ। सेनापति रुकमांगत कटुवाल संग नागरिक समाज र आम संचार ठ्याक्कै दुश्मनी नभए पनि उनी संग कोही पनि खुशी थिएनन। सन् २००१ मा कटवालले अजय पी. नाथको उपनामबाट थप्रै संकटकाल लगाएर सत्ता हातमा लि राजाबादी लेखहरु लेखेका थिए। जनयुद्धको समयमा उनी सुदूर पश्चिममा सेनाको कमान्डर भएर बस्दा पनि उनी प्रति व्यापक आलोचना थियो। उनका लोकतन्त्र र मानवधिकार प्रति प्रतिवद्धता अस्पष्ट थियो।[15]

कटुवाललाई सेनापति बनाउदा र उनका गतिविधि प्रति नागरिक समाज रुष्ट भएको थियो। तर संविधान सभाको चुनावले माओवादीलाई शक्तिशाली बनाए पछि, माओवादीले सत्ताकब्जा डरले गर्दा नेपाली सेना लोकतन्त्रको अनिवार्य तत्व बनेको दखियो।

साथै जनमुक्ति सेनालाई उचित स्थान दिएर नेपाली सेनामा समायोजन गर्ने काम प्रति पनि संचारमा आशंकाको आवाज उठ्न थाल्यो।[16]

नेपालको शान्ति पक्रियालाई सफल बनाउनेमा केही कुरामा ध्यान दिनै पर्छ। नागरिक समाजमा निरन्तर चलिरहने बहसले के चार वटा विषयहरु उठाएको छ:

क युद्धकालमा भएका मानवधिकार उल्लंघनको जिम्मेवार व्यक्ति तोक्ने र पुर्नमिलन प्रक्रियालाई अगाडि बढाउने।

ख भूमिसुधार लाई सुनिश्चित गरेर कब्जा गरिएका सम्पत्ति जग्गा फिर्ता गराउने र

ग माओवादी लडाकुलाई शान्ति प्रक्रियामा ल्याउने र नेपाली सेनालाई यसको संरचना र नैतिकता र मान्यतामा लोकतान्त्रिकरण गर्ने।

घ नेपालको भावी राजनीति स्वरुप र संरचनामा सहमति निर्माण गर्ने।

विगतका शान्ति प्रक्रियाको मूल्यांकनको निष्कर्ष के छ भने यो प्रबुद्ध समुदायको हाली मुहाली भयो र वास्तवमा यो समावेशी हुन सकेन। यसले धेरै ऐजेण्डा लिएर आएको छ।[17] विषयवस्तको र यसको आशयको अध्ययन र गहन विचार विना सहमति गरियो। राजाको बहिर्गमन पछि सातदल शान्ति स्थापानाका नाममा माओवादी लडाकुको माग प्रति बढी लचिलो भयो।

मेडियाले आधारभूत शान्तिका सवाललाई कसरी उठाएको छ भन्ने यो प्रोजेक्टमा अध्ययन गर्ने प्रयास गरिएको छ। यस अर्न्तगत २००९ देखि २०१० सम्म पाँच ओटा नेपाली अखबारको अनुगमन गरिएको छ।

## नेपाली पाँच अखबारको अनुगमन २००९

### पृष्ठभूमि:

नेपालको राजनीतिमा अगस्त १५ देखि सेप्टेबर १५ २००९ सम्म उतार चढावको अवस्थबाट गुज्रियो। त्यतिवेला मुख्य राजनीतिक दलहरु शक्तिशाली संवैधानिक समितिको अध्यक्ष पद हात पार्ने होडमा लागेका थिए। जब उक्त पद नेपाली काँग्रेसका प्रच्यासी निलाम्बर आचार्यले जिते। ने.क.पा माओवादीले ने.क.पा ए.मा.लेको सरकारको विरोधलाई तीव्र बनायो। माओवादीहरुले समानान्तर सरकार बनाउने धम्की सम्म दिए। यस्ता खालका स.राजनीतिक गतिरोधले सरकार संचालनमा बाधा पुरयायो। निर्विघनरुपले

14 इन्टरनेशनल क्राइसिस ग्रुप, नेपाल्स फ्युचर: इन हुज ह्यान्ड, एशिया रिपोर्ट नं: १७३, १३ अगस्त २००९, www.crisisgroup.org, पेज १।

15 उही पेज नं १३

16 उही पेज नं २

17 हेर्नुहोस निश्चिल नाथ पाण्डे, न्यू नेपाल:द फल्ट लाइन्स, इन्स्टिच्युट अभ साउथ एसियन स्टडिज, २०१०.मण्डला बुक्स पोइन्ट, काठमाडौं.

सरकारले आफना काम कायवाही संचालन गर्न पाउनु पर्ने कुरामा नागरिक समाज बुद्धिजीवि वकिलहरुको समूहले बारम्बर जोड दिदै आएको कुरा हो। राजतन्त्र उन्मूलन तथा तत्पश्चात् भएको आम निर्वाचनमा नेतृत्वदायी भूमिका खेलेको उक्त समूह अझै पनि प्रजातान्त्रिक प्रक्रियाको अझ सुदृढिकरण हुनु पर्ने कुरामा जोड दिन्छ।

यस समयको दौरानमा अल्पसंख्यक समुदायहरुले पनि आफनो सामाजिक तथा राजनीतिक अधिकारको लागि आवाज वुलन्द गरे। जब नेपाललाई जातीयताको आधारमा संघीय बनाउने विषयलाई लिएर राजनीतिक दलहरु बिचको वादविवाद बाहिर आयो। विभिन्न जातीय समूहहरु जस्तै किराँत गणतान्त्रिक मजदूर पार्टि र थारुवान मुक्ति मोर्चा आ आफना मागको सुनुवाई गराउन सडक आन्दोलनमा उत्रिए। हिंसाको माध्यमबाट तथा सरकार संग संवादमा नयाँ नयाँ सशस्त्र समूहहरु तराई क्षेत्रमा देखा पर्ने क्रम चलिरहनाले यो क्षेत्रको अवस्था तरल रहयो। उप राष्ट्रपति परमान्द झाले नेपालको एकमात्र सरकारी काम काजको भाषा नेपालीमा शपथ लिन अस्वीकार गर्नु मधेशवादी पार्टीहरुको आन्दोलन अझ बढी भाषिक थता राजनीतिक अधिकार पाउनु पर्ने थप कारण बन्यो।

संचारमाध्यमहरुले तत्कालीन मुख्य चुनौतिहरुलाई कसरी लिए त? के समाचार माध्यमहरुले समालोचनात्क संरक्षकको पदीय दायित्व बहन गर्दै मुख्य विषयहरुमा मुख्य पात्रहरुलाई जोड दिदै जनतालाई सुसुचित गराउने जिम्मेवारी बहन गर्न सक्यो त? राजनीतिक विषयवस्तुले केन्द्रीय विषय आगटेदा शान्ति प्रक्रियाका महत्वपूर्ण विषयहरु जस्तै माआवादी लडाकु व्यवस्थापन, १४ वर्षे द्वन्द्धमा कव्जा गरिएको जमिन फिर्ता, पीडितलाई न्यायबारेमा के संचारले विशेष जोड दियो त?

## विधिः

अगस्त १५ देखि सेप्टेम्बर १५ सम्म नेपाली पाँच दैनिक पत्रिकाहरुले नेपालमा चलिरहेको शान्त प्रक्रियालाई कसरी प्रस्तुत गरेका छन भनेर अनुगमन गर्नका लागि उनी हरुले लेखेको समाचारको विषयवस्तु, प्रकृति, समाचारका आधारहरु, र दृष्टिकोणको आधारमा नजिकबाट नियाल्न खोजिएको छ। यि पत्रिकाहरु यसप्रकार छन्: कान्तिपुर, नयाँ पत्रिका, अब नेपाली पत्रिका र हिमालयन टाइमस र रिपब्लिका अँग्रेजी पत्रिकाहरु।

पाँच विषयमा संग सम्बन्धित समाचारहरु संकलन गरिएका छन् र यिनै पाँचै विषयलाई पूरा प्रतिशत मानी प्रत्येक समाचारको प्रतिशत मात्रा निकालिएको छ। न कि सबै समाचारको संख्यालाई हरेर होइनन्।

यी पाँच विषयहरुमा लडाकु पुर्नस्थापना, कव्जा जग्गा प्रत्यास्थापन, राजनीतिक प्रक्रिया, नागरिक समाज / आन्दोलकारी, न्याय र पुर्नमिलन मा पत्रकार महासंग र आइ.एफ.जे. का सदस्यहरुसंग सामान्यतया नेपाली पत्रिकाहरुमा रिपोर्टिं गर्ने शैलीको बारेमा छलफल भयो।

छलफलका विषयहरु अस्पष्ट नहुन र नदोहोरिउन भनेर निम्न लिखित योजनाहरु बनाइयो।

- लडाकु पुर्नस्थापना भन्ने शिर्षकमा अन्य उपशिर्षकहरुमा राखेर छलफल चलाइयो। जस्तैः असक्षम लडाकु, लडाकु अनमिनको रेखदेखमा र नयाँ सेनाको संरचना।
- जमीन प्रत्यास्थापन अन्तर्गत भुमिसुधारको नीति र प्रत्यिास्थापनमा राजनीतिज्ञहरुको विचार
- राजनीनितक प्रक्रिया अन्तर्गत संविधान सभाको चुनावका घटना, प्रधानमन्त्रीको भारत र अन्य देश भ्रमण, संविधान निर्माण प्रक्रिया, विवादित उपराष्ट्रपतिको हिन्दीमा शपथ, माओबादी आन्दोलन।
- नागरिक समाज र आन्दोलन अन्तर्गत पेशागत समूह र संगठनहरुको क्रियाकलाप, जातीय अधिकार आन्दोलन र भाषिक अधिकार आन्दोलन।
- न्याय तथा पुर्नमिलन अन्तर्गत द्वन्द्ध पीडित परिवारलाई आमसंचारले कसरी लिया? बेपत्ता व्यक्तिको अवस्था, फिर्ता, क्षतिपूर्ति र पुर्नस्थापना।

यसबाट सर्वेक्षणबाट पत्ता लगाइएका कुराहरुलाई तालिकामा निम्नानुसार राखिएको छन्। पहिलो चाँहि पत्रिकाको अग्रभागमा कभर पेजमा आएका पूर्वउल्लेखित विषयहरु र दोश्रो चाँहि बाँकी सबै कभरेजलाई जनाउछ।

**प्रथम पृष्ठका विषयवस्तु प्रतिशतमा**

| पत्रिकाको नाम र विषय | कान्तिपुर | द हिमालयन टाइम्स | नयाँपत्रिका | रिपब्लिक | अब |
|---|---|---|---|---|---|
| लडाकु पुर्नस्थापना | १८ | ९ | २७ | ९ | ० |
| जमिन प्रत्यास्थापन | ० | ० | ० | ० | ० |
| राजनीतिक प्रक्रिया | ५८ | ८६ | ७३ | ७२ | ७५ |
| नगरिक समाज र आन्दोलन | १५ | ६ | ० | १६ | २५ |
| न्याय र पुर्नमिलन | ९ | ० | ० | ३ | ० |
| जम्मा | १०० | १०१ | १०० | १०० | १०० |

**सबै कभरेजमा छापिएका विषयवस्तु प्रतिशतमा**

| पत्रिकाको नाम र विषय | कान्तिपुर | द हिमालयन टाइम्स | नयाँपत्रिका | रिपब्लिक | अब |
|---|---|---|---|---|---|
| लडाकु पुर्नस्थापना | १२ | १२ | ९ | ८ | ० |
| जमिन प्रत्यास्थापन | १ | १ | २ | १ | ३ |
| राजनीतिक प्रक्रिया | ५३ | ४५ | ६७ | ५४ | २७ |
| नगरिक समाज र आन्दोलन | २७ | ४१ | १९ | ३५ | ७० |
| न्याय र पुर्नमिलन | ७ | १ | ३ | ३ | ० |
| जम्मा | १०० | १०० | १०० | १०१ | १०० |

माथि उल्लेखित पत्रिकाहरुको पाँच विषयहरु मध्ये राजनीतिक प्रक्रिया र संविधान सभा संग सम्बन्धित समाचारहरु बढी जोड दिईको पाइएका छन्। सम्भव त देशको तरल राजनीतिक अबस्था र माओवादीहरुले शान्ति प्रकिया छोडेर विद्रोहमा जान्छन् भनेर पनि हुन सक्छ। विशेष त प्रधानमन्त्रीको भारत भ्रमण र संविधान सभाको संविधान सभाको विभिन्न संवैधानिक समितिहरुको विवादहरुको बारेमा सबै भन्दा बढी समाचार प्रकाशन भए। हिमालयन टाइम्स यसको प्रथम पृष्ठमा ८६ प्रतिशत समाचार लेखेर सबैभन्दा बढी समाचार लेख्ने हरुमध्येमा छ। तर कान्तिपुर सबै भन्दा बढी

ठूलो पत्रिका भएर पनि आधा मात्र स्थान दिएको छ। जमिन प्रत्यास्थापन विस्तृत शान्ति सम्झौतको एउटा महन्वपूर्ण ऐजेण्डा जसले कुनै पनि पत्रिकाको अग्रभागमा स्थान पाउन सकेन यसले यो विषयलाई कम महत्व दिएका भन्ने जनाउछ। जबकि तराइमा संचालन भैरहेका सानो पत्रिका अब ले आफनो अग्रपृष्ठमा २५ प्रतिशत स्थान नागरिक समाज र आन्दोलनलाई दिएको छ। यसको मुख्य कारण के हुन सक्छ भने तराईमा भइरहेको अल्पसंख्यहरुको अधिकारको लागि अभियान र अब स्थानीय पत्रिका भएको अन्य पत्रिका भन्दा स्वत: स्थानीय विषय बढी आउछन् नै।

राजनीतिक प्रक्रिया संबन्धमा प्रकाशित सर्वेक्षण गरिका पत्रिकाको समाचारहरुलाई हेर्दा धेरै नै देखिए पनि प्रथम पृष्ठमा भन्दा कम महत्व दिइएका् छ। नयाँ पत्रिकाले यस विषयमा ६७ प्रतिशत स्थान दिएको छ। सबै भन्दा कम कभरेज पाउने विषयवस्तु भनेको न्याय तथा पुर्न मिलन हो जुन अब स्थानिय पत्रिका त शुन्य नै छ। चाखलाग्दो कुरा के छ भने अबले नागरिक समाज र आन्दोलनमा ७० प्रतिशत स्थान दिएको छ। यसले स्थानीय विषयलाई र नागरिक आवाजलाईृ बढी महत्व दिन्छ। जबकि, रिपब्लिका जुन नागरिक समाजका सक्रिय सदस्यद्धार स्थापित गरिएको हो त्यसले पनि हिमालयन टाइम्स र अबले भन्दा कम कभरेज दिएको छ। तथापि यसले नागरिक समाज र स्वतन्त्र नागरिकको बारेमा लेखिएका आलेख र कथाहरु प्रशस्त मात्रमा छापेको थियो जसले यसको आफनो इतिहाँसको प्रतिविम्वित गरको छ।

**औसत श्रोतको संख्या लेख अनुसार**

| पत्रिका | कानतिपुर | द हिमालयन टाइमस | नयाँ पत्रिका | रिपब्लिका | अब |
|---|---|---|---|---|---|
| औसत श्रोतको संख्या | १.२६ | १.३६ | १.२४ | १.३० | ०.७० |

अब र नयाँ पत्रिकाले आफनो झण्डै एक तिहाइ समाचारमा कुनै पनि श्रोत खुलाएका छैनन्। अबले प्रत्येक लेखमा एउटा भन्दा कम श्रोत दिएको छ। र अरु बाँकीले एउटा भन्दा बढी प्रयोग गरेका छन्। कान्तिपर र रिपब्लिकामा दश भागमा एक भाग लेखमा मात्र तीन अथवा त्यो भन्दा बढी श्रोतहरु प्रयोग भएको छ। अज्ञात श्रोतहरु सबै पत्रिकाहरुमा अत्यधिक छ।

**श्रोतको संख्या प्रति लेख प्रतिशतमा**

| पत्रिका र श्रोत | कान्तिपुर | द हिमालयन टाइमस | नयाँ पत्रिका | रिपब्लिका | अब |
|---|---|---|---|---|---|
| कुनै पनि श्रोत नभएको | १६ | १२ | ३२ | १९ | ३९ |
| १ | ४२ | ४५ | ३७ | ४० | ३९ |
| २ | २९ | ३६ | २२ | ३२ | १७ |
| ३ | १३ | ६ | १० | १० | ४ |

*अज्ञात श्रोतहरु यहाँ गणना गरिएको छैन

**श्रोतकोरुपमा साझेदार प्रतिशतमा**

| पत्रिका र साझेदारहरु | कान्तिपुर | हीमालयन टाइमस | नयाँ पत्रिका | रिपब्लिका | अब |
|---|---|---|---|---|---|
| सरकार | ५० | ३४ | ५० | ४३ | २६ |
| राजनीतिक दल जो सरकारमा नभएका | १३ | १९ | २२ | ८ | ५ |
| नगरिक समाज | २५ | ४१ | १३ | ३५ | ४७ |
| नगरिक समाज | २ | २ | ७ | ९ | ५ |
| सुरक्षा बल | १० | ३ | ८ | ५ | १६ |
| जम्मा | १०० | ९९ | १०० | १०० | ९९ |

प्रत्येक साझेदारले संचारमा आफनो उपस्थिति कति, कस्तो हुने भन्ने कुरा प्रत्येक समाचारमा समय अवधिको विश्लेषको आधारमा दिइने श्रोतको गणना र मूल्यांकनबाट थाहा हुन्छ। जुन समाचारले सरकारी र गैह्रसरकारी राजनीतिक श्रोतको ठूलै चागं लिने गर्छ त्यसले सबैभन्दा बढी समाचारले बढी स्थान लिने गर्दछन्। अपबाद नै भन्नु पर्दछ कि अब ले झण्डै अरु साझेदारको आधा भाग नागरिकसमाजलाई श्रोतकोरुपमा लिन्छ जब कि पहिलाका दुई साझेदारले जम्मा एक तिहाई ओगटछ। रिपब्लिका र हिमालयन टाइम्सले मात्र करीब एक तिहाई समाचारमा मात्र नागरिक समाजका् श्रोत दिने गर्दछन्। जबकि सबै पत्रिका मध्ये कान्तिपुरले सबै भन्दा बढी श्रोत सरकारको दिने गर्दछ। नागरिक र सुरक्षा बलको सबै पत्रिकाहरुमा एकदम कम श्रोतको रुपमा पाइन्छ।

## पत्रिकाहरुको विश्लेषण:

### *कान्तिपुर:*

झण्डै दुई लाख भन्दा बढी विक्रि हुने, काठमाडौं, नेपालगंजमा स्वदेशभित्र र मुलक बाहिर कतार र अमेरिकामा प्रकाशित हुने नेपालको सबैभन्दा ठूलो प्रिय पत्रिका कान्तिपुर दैनिक हो। नेपालको सबै भन्दा पुरानो र हाल सञ्चालनमा रहेको नीजिक्षेत्रले चलाएको नेपाली भाषाको पत्रिका हो। पाँच पत्रिकाहरु मध्ये यसले धेरैजसो पृष्ठ समाचार लाई दिन्छ जसमध्ये ५ वटा समाचार राष्ट्रिय समाचार, २ राजधानीबाट, काठमाडौंबाट। अन्य पत्रिकाको तुलनामा यसले प्रत्येक लेखमा तीन भन्दा बढी श्रोतहरु प्रयोग गर्दछ। यसको समाचारमा स्पष्ट पत्रकारिताका विचारहरु देखिदैनन्।

नाम र लोकप्रियताको निम्ति कान्तिपुर पत्रिका श्रोतको लागि सरकारी तथ्यांकमा भरपर्दा समाचारमा सूक्ष्म अनुसन्धनात्मक पाटो कमजोर हुन्छ जुन अन्य गैह्रमुलधारमा रहेका पत्रिकाहरुमा देखिन्छ। त्यस्तै युद्धका पीडित, घाइते, विस्थापितको राहतको लागि समाचार हुने सम्भावान कम हुन्छ। कान्तिपुर मुलुको सबै ठाँउमा पुग्ने पत्रिका भएकोले यसले शान्ति प्रक्रिया र यसमा भएका सबै किसिमका खेलाडीमा प्रभाव पारेको हुनु पर्छ।

### *द हिमालयन टाइमस:*

द हिमालयन टाइमसमा सामान्यता उच्चस्तरीय समाचार रिपोर्टिं लाई देखिन्छ। कम भन्दा कम सनसनीपूर्ण समाचारका टुक्राहरु र राजनीति, नागरिक समाज, र स्थानीय समाचारको राम्रो संयोजन यसमा पाइन्छ।

समाचारको लागि छटाइएको पाँच पेज मध्ये २वटा राजधानीको लागि छुटाएको छ । मुलका लोकप्रिय र उत्कृष्ट अँग्रजी पत्रिकारुपमा यसले राष्ट्रिय समाचारहरुलाई जोड दिन्छ र यसले काठमाडौंमा रहेका अन्य पत्रिकाले जस्तै तरल तराइका समाचारलाई कम स्थान दिन्छ।

सर्वेक्षणीको समयमा यो पत्रिकाले सन २००९, अगस्त ३१मा उपराष्ट्रपतिको हिन्दीको सपथलाई अर्को सविधानिक गति अवरोध ल्याउने भनी आलोचना गरको थियो। यसले आफनो मुख्य समाचारमा उप राष्ट्रपतिलाई र प्रधानमन्त्री, सभामुख र अन्य दलका राजनीतिक दलका नेतालाई उपयुक्त निर्णय लिन नसकेकोमा आलोचना गरेको थियो। यो पत्रिका यति सम्म गरयो कि सेप्टेम्बर पहिलोको प्रकाशनमा अग्रपृष्ठमा नेताहरुको नाम राखेर जस्ले आफनो विश्वासको रक्षा गर्दै आफनो पदबाट राजीनामा दिएका थिए। प्रेष्टिजियस पोष्ट मिन्ट नोथिं टु देम भन्ने शिर्षकमा छापिएको यो समाचारले उप राष्ट्रपति झालाई पदमा बस्न नसुहाउने भनी आरोप समेत लगायो।

### नयाँ पत्रिका:

नयाँ पत्रिका १६ पेजको ट्याब्लाइड साइजको कागजमा प्रकाशन हुने यो पत्रिका विशेषत प्रथम पृष्ठमा सनसनीपूर्ण समाचारको शिर्षकको लागि परिचय बनाएको छ। सधैजसो पहिलो पृष्ठमा एउटा कथा, ठूलो तस्वीर र श्रृजनशील र आकर्षक शिर्षक हन्छ यस्मा। हिन्दीमा सफद लिएर विवादमा तानिएका परमानन्द झाको इतिहास वा संविधान सभामा सबै भन्दा बढी अनुपस्थित हुने सभासदको नाम सुचीबद्ध गरेर अनुसन्धनात्मक पत्रिकाको रुपमा आफनो परिचय दियो। यसता समाचारहरु अन्य पत्रिकामा स्थाननै पाउदैनन् तर यसले आकर्षक ठूला र रंगीन अक्षरमा लेख्दछ।

यसले समाचारमा धरै श्रोतहरु र स्वार्थ समूहको व्याख्या गर्द छ। धेरै जसो लेखमा एउटा भन्दा बढी श्रोत पाइनदैन र केहि समाचारहरुमा माओवादी विचारको प्रभाव देखिन्छ।

### रिपब्लिका:

रिपब्लिका न्यू रिपब्लिका मेडिया हाउस प्राइभेट हाउसद्धारा प्रकाशित नयाँ प्रकाशन हो। सत्यको खोजीमा भन्ने मूल मन्त्र लिएर आएको यो अँग्रेजी पत्रिकाका १२ पेज छन्। जसमध्ये प्रथम ३ ओटा पेज राष्ट्रिय समाचार, ४, ५ विचार, ६,७ व्यापार र बाँकी चाँहि खेलकुदको लगि जीवनशैली र अन्तराष्ट्रिय समाचारको लागि राखिएको छ। हरेका शुक्रबारमा थप ४ पेज एन. जि. ओ.को र स्वतन्त्र व्यक्तिहरुको गतिविधिको लागि थपिन्छ। अनरिपोर्टिड लाइफ शिर्षकमा आउने यो खण्डमा नागरिक समाजका नेतृत्वका गहन विचार विश्लेषण र कथाहरु, पूरा विवरण खुलाइएका हुन्छन। यसले नागरिक समाजको विचारलाई ल्याउछ त्यसैले यो अप्रत्यक्षरुप सेन्सर पनि भन्न सकिन्छ।

यस पत्रिका विश्लेषणात्मक समाचार पनि हन्छ। यसले गर्दा कहिले काँही चर्को विवाद पनि ल्याउछ। सर्वेक्षणको तीस दिने अवधिको क्रममा यसले मुखय राजनीतिक दलविच झगडा, माआवादीद्धारा संसदमा अवरोध, संवैधानिक समितिका अन्यौलता अदि। त्यस्तै अर्को विश्लेषणात्क लेख उपराष्ट्रपतिको पुनः सफद लिन इन्कार गर्नु संग थियो।

यो पत्रिका आकर्षक स्वरुपको उच्च स्तरीय अखबार हो। यसले नागरिकहरुलाई बढी प्राथामिकता दिन्छ। यसले के देखाउछ भने अन्य पत्रिका भन्दा यो पत्रिका यो सरकारी सूचना र तथ्यांक भन्दा माथि उठेर कथको भित्त गहिराई सम्म प्रवेश गर्ने प्रयत्न गर्दछ।

### अब:

यहाँ सर्वेक्षण गरिएकाहरु मध्ये निकै फरक पत्रिका अब विराटनगरमा प्रकाशित हुने सानो पत्रिका हो। आकारका हिसाबले ४ पेज मात्र भएको यो पत्रिकाले अधिकांश स्थानिय समाचार छाप्छ। यसले अन्तराष्ट्रिय समाचार नछापिने यो पत्रकिमा विभिन्न प्रकृतिको असुरक्षा सम्बन्धि छाप्छ जस्तै हत्या, अपहरण, सशस्त्र समूह आदि। तराईमा बढ्दै गइरहेको अपहरणलाई प्रतिविम्वित गर्न एउटा लेखको एक तिहाई आगटेको ठूलो कार्टुनको पनि प्रयोग हुन्छ।

पहिलो पेजमा दुई ओटा भन्दा बढी कथा नहुने यो पत्रिकामा समाचारको लिड आकर्षक र सनसनीपूर्ण हुन्छ। लिड कथाले घट्नाको विवरण भन्दा पनि यसको समालोचना र अनुसन्धनात्मक हन्छ। यसले नागरिक, व्यावासायिक र सरकारी तथ्यांकलाई श्रोतको रुपमा प्रयोग गर्दछ।

ठूला कथाहरु नागरिक समाजसंग सम्बन्धित हुन्छन् भने अन्य स साना स्थानीय समाचारहरु हनछन्।

यसमा राजनीतिक प्रकृतिका समाचार अलि कमै हुन्छन्। यसमा न त मधेश अभियानको बारेमा न त उप राष्ट्रपतिको शपथ यसले कसरी भाषा अधिकारलाई प्रभाव पारयो। बारेमा नै लृखियो।

### निष्कार्ष:

आघि माथि गरिएको विश्लेषणबाट नै स्पष्ट भैसकेको छ कि नेपालका पत्रपत्रिकाहरु विविध गुण, ऐजेण्डा र विषयमा केन्द्रीत छन्। धेरै सफल पत्रपत्रिकाहरु ले पूर्वाग्रहबाट मुक्ति रहेका हुन्छन्। यसता पत्रिकाले धरै श्रोतको प्रयोग गर्दछन् र विविध प्रकारको लेखहरु हून्छन्। अर्को तर्फ यसता पत्रिकाले समाचारहरुलाई बजारमा विक्रि गर्न सनसनीपूण बनाउदछन्। यसले नेपाली पत्रपत्रिका गुणात्मक पत्रकारितको विकास गर्नेक्रममा कुन स्थानमा छन् भन्ने कुरा बताउछ।

## संचार अनुगमनः अगस्त २०१०

एक वर्ष पछिको संचार अनुगमनमा यस्ता प्रवृतिहरु देखिएका छन्। जस्तै राजनीतिमा बढी जोड, जनताको चासो रहने अत्यावश्यकीय विषयवस्तुको वहिष्करण। विशेषगरी युद्धपीडितहरुको विषय स्पष्टरुपमा बहिष्करणमा परेको छ। यो अनुगमन अभ्यासमा नयाँ प्रधानमन्त्रीको निर्वाचनको लागि भएको राजनीतिक गतिरोधको विषयवस्तु मुख्य समाचारकोरुपमा अधिकांश प्रकाशनहरुमा रहयो।

अगसत ७ का दिन प्रकासित सबै पत्रपत्रिकाहरुले मुख्य समाचारकोरुपमा संसदमा अघिल्लो दिन भएको प्रधानमन्त्रीको निस्कर्ष विहीन चुनावलाई बनाए। सम्पादकीयहरुमा उक्त चुनावलाई महत्वहीन प्रक्रियाकोरुपमा वर्णन गर्दै एक वा अन्य पार्टिहरुलाई राजनीतिक गतिरोधलाई अन्त गर्न गम्भीर हुन आह्वान गरिया। परिस्थितिमा कुनै तात्विक भिन्नताको आशा नगरिएको अगस्त १८ अर्को पटकका मा हुने भनिएको प्रधानमन्त्रीको चुनाव संग सम्बन्धितसमाचारहरु पत्रिकामा धेरैजसो छापिएका थिए। केही पत्रिकाहरुले केही पर्टि विच सहमतीय प्रवृति देखिएको समाचार साथै नेपाली काँग्रेस र माओवादी भित्र पैदा भएको गुटबन्दी पछि सहमतिको

नारा लिएर संविधान प्रक्रिया अगाडि बढाउने नेताहरुको निराशा पनि समाचारमा आए। अन्तर राष्ट्रिय संघ संस्था तथा मिशनहरुको भूमिकालाई निरीक्षण गर्दै विशेष ध्यान इन्डियन एम्बेसीलाई दिइयो। एक माओवादी सभासदले भारतीय दूतावासका एक अधिकारीले आफलाई ज्यान मानेएं धम्की दिएको दाबी गरा ती सभासद माओवादीको नेता पुष्प कमल दाहाल प्रचण्डलाई निर्वाचित गर्न मधशबादी दलको सहयाग लिने प्रयासमा थिए। अन्य पत्रिकाहरुले के छापे भने सभासदले यस्ता राजनीक प्रयास जारी राखे। भारतीय लगानिमा संचालित स्कलमा अध्ययन बालबालिकाको भर्ना रद्द गर्ने धम्की समेत दिएको छ।

धेरै जसो पत्रिको मधेशबादी दलहरु प्रधान मन्त्रीको चनावमा तटस्थ बस्नकोपछाडि भारतीय दबाव रहेको समाचार छापे।

नेपालको शान्त्रित पक्रियाको अनुगमन गरिरहेको राष्ट्रसंघीय अनमिन को कार्याविधि र कार्यदेश सकिनै लागदा विवादको केन्द्रविन्दु बन्यो। जब अनमिनले माओवादी लडाकुहरुको समायोजन वतथ पुर्नस्थापनाको योजनको प्रस्ताव गरयो तब विभिन्न राजनीतिक दलहरुले देशका सार्वभौ मिकतामाथिको हस्तक्षेप भन्दै त्यसो विरोध गरे समचार माध्यमहरुले यसै विवादमा आफलाई केन्द्रीत गरे जुन विवादले राजनीतिक पार्टिहरु भित्र अनमिन माओवादी पक्षीपय भएको हो कि भन्ने डर उत्पन्न गरायो।

केही दैनिकहरुमाका लागि केही पार्टि कार्यकताहरुको लम्बिएको राजनीतिक गतिरोध प्रतिको बेचैनी संबन्धित समाचारलेनै प्राथामिकता पाए। यस्ता प्राथामिकताहरुले सेप्टेम्बरको पहिलो हप्तासम्ममा समाचार माध्यमा मुख्य स्थान पाइरहे। विदेशी मिशनहरुको भूमिकालाई फेरि एकचोटि समाचारहरु बाहिर आए जब भारतीय दुताबास र नेपालको चर्चित समाचार समुह भारतीय उपभोगीय समानाको उत्पादनलाई लिएर शब्द युद्धमा उत्रिए। कान्तिपुर समाचार समूहलाई इण्डियन कम्पनि डावरको नकारात्मक प्रचार प्रसार गरी पैसा असुल्न खोजेको आरोप लगाइयो। यसको बदला नेपाली संचार नेपाली माध्यमले कान्तिपुरको सम्पदकीय दृष्टिकोण भारतीय स्वाथ्रको विरुद्ध भएकोले साटिमा कान्तिपर समूहलााई विज्ञान दिन आरोप लगायो।

माओवादीका तीन ठूला नेता विच कुन राजनीतिक एजण्डा पर्टिले अब अबलम्बन गर्ने भन्ने विषमा भएकृ मतभेदको विषयमा जस्तै राष्ट्रपतिले गतिरोध अन्त्य गर्न गरेको प्रयास असर सम्बन्धि विषयले पनि समाचार स्थानमा प्रमुख स्थान पायो। संप्रेषित समाचार को ढाँचाको आफै मूल्यांकन गर्दै धरै छुटेका विषयहरु मथि विचार गरे। उदाहरणको लागि समाचारमा प्रयोग भएका शब्दहरुलाई लिएर गम्भीर असहमति हने ठाँउ छन्। धरै पत्रिकाहरुले माओबादी लडाकुको सटामा जनमुक्ति सेना, १० वर्षे शसस्त्रको सटा जनयुद्ध जस्ता शब्दको प्रयोग गरे। यी शब्दहरुले मात्रै पनि तर्कहरु एकतर्फी भएको र संबन्धित समाचार मा अत्यावाश्यकीय तठस्थता नभएको देखिन्छ। पत्रकारहरुले आगामी राजनीतिक दिशाा जस्ता ठूला विषयहरुबस्तुको मूल्यांकन गरी स्पष्टरुपमा जनता समक्ष राख्न नसक्दा अधिकाँश जनताहरु यसता विषयहरुमा अस्पष्ट नै छन्।[18]

18 जैनेन्द्र जीवन, "पिपल्स नो. टु एथ्निक फेडेरलिज्म", रिपब्लिका, नोभेम्बर २५, २०१०, पेज ६, नोभेम्बर ३०, २०१०: http://www.myrepublica.com/portal/index.php?action=news_details&news_id=25542

## रेडियोकर्मीहरुको हत्याले असुरक्षा को स्थिती देखाउछ

देशको परिस्थिती झन झन अस्तब्यस्त वन्दै गइरहेको परिवेशमा सन २०१०को फेब्रुअरी देखि जुलाइ विचमा नेपालका ३ जना रेडियो पत्रकार हरुको हत्या भयो। सबैभन्दा पछिल्लो घटनामा नेपालको मध्य पश्चिमको दाङ जिल्लको रेडियो तुल्सिपुरका अध्यक्ष, देवी प्रसाद धितालालाई २२ जुलाइका दिन हत्या गरियो।

धितालको हत्याको वेला उनी आफु १५ वर्ष देखि संवद्ध रहेको पार्टी नेपाली काँग्रेसको गाँऊ समितिको चुनावको प्रचार प्रसार अभियानमा थिए। नेपाली काँग्रेस वर्तमान कामचलाउ सरकारको एउटा साफ़ेदार भएपनी स्थानिय अनुसन्धानकार्ताहरुको के मा विश्वस्त छन भने धितालको चुनावि अभियान कुनै ठुलो प्रतिस्पर्धाको लागि नभएर केवल पार्टीको माहाधिवेसनमामा क्षेत्रिय तथा राष्ट्रिय प्रतिनिधि चुनिनको लागि मात्र थियो।

तुल्सिपुर एफएम जसका संचालक धिताल थिए, यो रेडियो सन् २००५मा अन्तराष्ट्रिय सहयोगमा स्थापना भएको र एउटा ट्रष्ट द्वारासंचालित रेडियो हो। उक्त रेडियो स्टेसन स्थानिय विज्ञापनको भरमा संचालित हुदै आएको छ। रेडियोले स्थानिय विज्ञापन वाट रु दुइलाख पचास हजार मासिक आम्दानी गर्ने गरेको छ। १७ जना पत्रकार कार्यरत उक्त रेडियो केहि विज्ञापन तथा केहि दाता वाट प्राप्त सहयोगको माध्यमले जसोतसो चल्दै आइरहेको छ। रेडियोको दैनिकी संचालमा सरकारको विज्ञापन वितरण नितीले पनि ठुलो योगदान पुऱ्याएको छ।

२०१० को सुरु तिर पनि, तुल्सिपुर एफएम मा कार्यरत पत्रकार नारायण खडकालाई आफुलाई टाइगर भन्ने स्थानिय आपराधिक समुहले आफुहरु विरुद्ध समाचार प्रसार गरेको भन्दै टेलिफोन वाट धम्कि दिएका थिए। उक्त टाइगर समुहले केहि अघिपनि, उनिहरुले मागलाई अस्विकार गरेको भन्दै गाऊको स्कुल भवनमा आगजनी गरेका थिए। उक्त धम्कि पछि खडका विस्थापित भएर सुरक्षित स्थानको खोजिमा काठमाडौ आएका थिए, पछि त्रासको वातावरण कम भएको छ भन्ने विश्वास भएपछि मात्र उनि तुल्सिपुर फर्किए।

स्थानिय प्रहरी पनि टाइगर समुह आपराधिक भएको स्वीकार गर्दै त्यो समुहमाथि उनिहरुले निगरानी गरेको तर अहिले त्यो समुहकोलाई निष्कृय परिएको वताउछ।

फेब्रुअरी ७ स्पेसटाईम नेटवर्कका अध्यक्ष जमिम शाहलाई काठमाडौमा गोलि हानी हत्या गरियो ।शाहको स्पेसटाइम नेटवर्क पनि टेलिभिजन तथा रेडियोको क्षेत्र संग सम्वन्धित छ। मार्च १ मा जनकपुर टुडे समुहका अध्यक्ष तथा साफ़ेदार अरुण सिहांनियालाई जनकपुरको ब्यस्त वजारमा गोलि हानि हत्या गरियो। जनकपुर टुडे समुहले एफ एम तथा पत्रिका संचालन गर्ने गर्दछ जसमा हत्या गरिएकी अर्की जनकपुर की पत्रकार उमा सिंह काम गर्थिन। कुनै पनि हत्यको छानविनमा केहि पनि प्रगति हुन सकेको छैन। शाहको घटना चाहि छिमेकि देशका संस्थाहरुको आपसि शत्रुताको कारण भएको वताइएको छ। ति संस्थाहरु आफनो स्वर्थ पुर्ति गर्नकोलागि ब्यापारिक समुहहरुलाई प्रयोग गर्ने गरेका वताइएको छ।

सिंघानियाको हत्याको जिम्मेवारी भने तराइ क्षेत्रमा सक्रिय दुई शसस्त्र समुहहरु तराइ जनतान्त्रिक पार्टी (मधेस) तथा जनतान्त्रिक तराइ मुक्ति

मोर्चाले लिए। उनको हत्याको कारण भने मधेशका आपराधिक शसस्त्र समुह प्रतिको जनकपुर टुडे समुहको संपादकीय दृष्टिकोण रहेको विश्वास गरिन्छ। यस्ता आपराधिक समुहरु हत्या मा संलग्न रहदै आएका छन जस्तै उमा सिंहको हत्यामा देषि ठहर गरि पक्राउ परेका तिन जना अभियुक्तहरु कुनै न कुनै आपराधिक समुहसंग आवद्ध रहेको पाइएको थियो। जनकपुरमा त हत्या तथा हत्या प्रयासहरुको डरलाग्दो श्रिङखला नै चलेको थियो। १८ जुलाईका दिन रेडियो जनकपुरका निर्देशक प्रमोद शाहलाई हतियार ले सुसज्जित आपराधिक समुहले फलाम तथा काठको लाठि ले आक्रमण गरि घाइते वनाए। शाहलाई टाउको तथा ढाडमा गम्भिर चोट लागेको थियो।

यद्यपि पुलिसले शाहलाई आक्रमण गर्ने ३ जनालाई तुरुन्त पक्राउगरि तिनै जना लागु पर्दाथको दुव्यसनी भएको र नसामा उनिहरुले आक्रमण गरेको वताएपनि, एउटा संचार समुहको हैसियतले जनकपुर टुडेले आफनो अस्तित्व माथि खतरा छ भनी सोच्नु मा गतल हुदैन।

## नेपाली पत्रकारहरु विच भएका समुह केन्द्रित सर्वेक्षण

नेपालका विभिन्न सहरमा संचालित कार्यसाला गोष्ठिको सिलसिलामा नेपाली पत्रकारहरु विच एउटा केन्द्रित समुहको अनौपचारिक सर्वेक्षण गरिएको थियो। पचास पत्रकार सहभागि भएको सर्भेक्षणमा उनिहरुको पेशाकार्यले शान्ति प्रक्रियालाई योगदान गरेको अथवा भाँडन खोजेको छ उनिहरुले कसरि लिएका छन त भन्ने पत्ता लगाउन खोजिएको थियो।

धेरै जसो पत्रकारहरु अन्य धेरै पेशामा संलग्न भएका पाइयो। धेरैले विधुतिय तथा छापाका संचार माध्यामा संग संगै काम गरि रहेका थिए। सर्वेक्षणमा सहभागिहरु मध्ये धेरै नेपाली संचार माध्यममा कार्यरत थिए, भने केहि मैथली, थारु, लिम्वु तथा अन्य राष्ट्रभाषहरुका पत्रकारहरु थिए।

आफना पाठक तथा श्रोताहरुको प्रकृतिको दृष्टिकोणमा केहि संचार कर्मीहरु अरु धेरै भाषिक समुदायका पत्रकार भन्दा स्पष्ट देखिन्थे। त्यस्ता क्षेत्रमा वहुभाषिक समुदायहुने भएकोले त्यस्ता पत्रकारहरुको परिचय पनि स्पष्ट नहुने पाइयो। कस्ता समाचारलाई स्थान दिने भन्ने विषयमा कुनै राजनीतिक सिद्वान्त प्रति स्पष्टरुमा आश्था भएका पत्रकारहरु वढि स्पष्ट भएको पाइयो। उनिहरुका अनुसार यो स्पष्टता कुनै पार्टी विशेष प्रतिको लगावका कारण नभएर ठुला राजनीतीक तथा समाजिक विषयहरु जस्तै शान्ति, सामाजिक न्याय, तथा प्रजातन्त्र प्रतिको उनिहरुको प्रतिवद्वताको कारण भएको हो। सर्वेक्षणमा सहभागि केहि ले मात्र उनिहरुले आफनो पेशागत प्रतिवद्वतालाई मिसनको रुपमा लिएको खुल्लरुपले वताए। अन्यथा पठकहरुको प्रतिकृया लिनकोलगि कुनै उचित प्रणाली नभएकोले कस्तो खालको विषयवस्तु, कुन खालको दृष्टिकोण तथा अभिब्यक्ति लेखलाई उचित हुन्छ भन्न आफनै वुभ्काइमा भर पर्ने गरेका छन।

धेरै जसो पत्रकारहरुले द्वन्द्व पछिको समयमा आफुहरुको सुरक्षाको अवस्थामा सुधार आएको वताउछन भने, नेपालगन्जका पत्रकारहरु अवस्था साच्चैनै अफ वढि खराव हुदै गएको वताउछन। उनिहरुका अनुसार द्वन्द्व कालमा माओवदी तथा राज्य दुइ पक्षवाट मात्र खतारा रहेकोमा विस्तृत शान्ति संभ्कौता पछि तात्कालिन विद्रोही समुहवाट विखण्डन भई जातियताको नाममा बनेका सशत्र समुह वाट पत्रकारहरुले अफुहरुलाई खतरा अभ्क असुरक्षित महसुस गरेका छन। घोषित द्वन्द्वको अवस्थामा भएका सशत्र समुहका मागहरु तथा ब्यवहारको तुलनात्मक रुपमा पुर्वानुमान गर्न सकिने हुनथ्यो तर अहिले स्पष्टरुपमा आपराधिक उद्देश्यले प्रवेश पाउनाले अनिश्चितता थपिएको छ। केहि समय अघि भएको विरेन्द्र साह तथा डेकेन्द्रं थापाको हत्यामा स्पष्ट राजनैतिक कारण थियो। तर अहिले सशत्र समुहहरुले जुन पनि वाहानमा, जुनसुकै कारणमा पनि हत्या आतंक मच्चाइ रहेका छन।

सर्वेक्षणमा सहभागि पत्रकार मध्ये धेरैले शान्ति प्रक्रिया संग सम्वधि चारवटा विषयहरुले संचार माध्यमहरुमा राम्रो स्थान पाएको आफुहरुले महसुस गरेको वताए। अभ्कपनि संचारमाध्यमहरु ठुलो राजनीति तथा ठुला पार्टीहरुको राजनितीक उदेश्य वाट प्रभावित हुनु संचारमाध्यमहरुको सवैभन्दा ठुलो कमजोरी रहेको वताए।

केहि भएको पुर्नमिलनको प्रक्रियालाई पनि तोडमोड गर्ने काम राजनितीक दलहरुविच रहेको अघि पछिको संवन्धले गरेको छ। सानो सानो कुरालाई पनी राजनितीकरण गरिने तथा ठुला राजनीतिक दलहरुको रुपमा रहेको मतभिन्न्ताकोरुपमा हेरिने प्रवृतीरहेकोले स्थानीय स्तरमा राजननितीक जिवन तनावपुर्ण रहेको छ। यस्ता विषयमा दुइ पक्षको विचमा वसेर लेख्न पत्रकारहरुलाई पनि असजिलो हुने गरेको छ।

शान्ति प्रक्रियाका ४ महत्वपुर्ण विषयहरुले संचारमाध्यममा प्रथमिकता पाएका थिए। ति विषयकहरुलाई तिनीहरुले पाएको प्रथमिकताकोआधारमा चार्टमा प्रस्तुत गरिएको छ। माओवादी लडाकुहरुको पुनस्थापनाको विषयमा ठुला राजनैतिक दलहरुको नेताहरुको भनाइमा आधारित भएर समाचारहरु संप्रेषण भएका छन। माओवादी लडाकुहरु रहेको क्यानटोनमेन्ट मा भइरहेको गतिविधि प्रत्यक्षरुपमा स्थलगत निरिक्षण गरेर समाचार संप्रेषण गर्ने प्रयास नगण्य छ।

राष्ट्रसंघको खुकुलो अनुगमनको वारेमा प्रकाशित समाचारहरु तथा पुरै शान्ति प्रक्रियाको वारेमा सहभागि पत्रकारहरुको कस्तो अनुभव रहे को छ भन्ने विषयमा जानकारी लिने प्रयास गरिएको थियो। नेपालको शन्तिप्रक्रियाको अनुगमन गरिरहेको राष्ट्रसंघीय मिसन (अन्मिन) को अनुगमन सारै खुकुलो भएको प्रमाण जर्वजस्ती चन्दा संकलन तथा डकैतीमा आरोपित माओवादी नेताले पक्राउवाट वच्न शक्तिखोर क्यान्टोनमेन्टमा सरणलिइरहे को समाचारले देखाउछ।

यसै गरि कब्जा गरिएका घर जग्गा फिर्ता गर्ने सम्वन्धमा संचार माध्यमहरुले कुनै विशेष घटनालाई मात्र उठाएका छन त्यो पनि यदि स्थानियहरु आफैले आवाज उठाउपछि मात्र। उमा सिंहको घटनामा भने जग्गाको विषयले भावनामै छुने गर्छ कि मालिक तथा कानुनले पुर्णरुपमा विश्वस्त नभइकन थोरै पत्रकारले मात्र यसको विषयमा आवाज उठाउछन।

संधियताको विषयमा पनि संप्रेषित समाचार हरुमा मौलिकता नभएको पाइयो। नेपालको लागि नयाँ विषय भएकोले दक्षताको खाचो रहेको छ।

नेपाली पत्रकारिताले तटस्थतालाई पत्रकारिताको आधारभुत धर्म मानेर त्यसलाई अगाल्ने वा शान्ति र प्रजातन्त्रको रक्षाको निम्ति आवाज उठाइर हने भन्ने विचमा रोज्न पर्ने भएको छ। धरैजसोले आफनो कामलाई मिशन संग जोड्दछन् तर कतिपयले जो स्थापित संचारमा संस्थामा छन् उनीहरु समदूरी र तटस्थामा विशेष जोड पनि दिन्छन्।

एउटा के मान्यता छ भने पत्रिकारिताका निर्णय र सम्पादकीयले सबैकुरालाई समावेश गर्न सक्ददैन र निश्चित दूरी र तटस्थता कायम




एउटा पत्रिकामा प्रकाशित फोटोग्राफ्स्, जहाँ काठमाडौंको सडकमा हिंसाको बेलामा घाईते महिलालाई सहयोग गरिँदै ।

पनि गर्न सक्दैन। धरैजसो पत्रकारहरुले देश शान्ति प्रक्रिया र लाकतान्त्रिक गणतन्त्रमा परिवर्तन भैरहेका अवस्थामा निरन्तर परिवर्तनमा महत्वमपूर्ण भूमिका खेल्ने पत्रकारितामा तटस्थताले बाधा ल्याउन सक्छ भनेर सोच्दछन्।

स्पष्टरुपमा आक्रमक र घातक तर्क, जुन आजभोलि राजनीतिककर्मीहरु विच भैरको छ, र देशमा चलिरहेका शान्ति पक्रियामा गतिरोध पैदा भएको बेलामा समाचार लेख्नु पेशागत चुनौति हो। त्यसतै राजनीतिमा भएको विकृतिलाई बेवास्तागर्नु भनेको त व्यावासायिकता नै होइन। यस्तो घट्नाको रिर्पोटिं गर्दा व्यक्तिको व्यक्तिगत विचार नदेखिनेगरी रिपोर्टिड गर्नु व्यावासायिक चुनौति हो। यसले लागि न्यायपूर्ण वैकल्पिक श्रोतको प्रयोग माग गर्दछ जुन हरेका घट्नामा शान्ति प्रक्रियाको व्यापक संकेतकोरुपमा प्रतिविम्वित हुन्छ। नेपालको शान्ति प्रक्रियाबारेमा पत्रकारहरुले के पहिचान गरेका छन् भने अहिलेको नेपालको द्वन्द्वपछिको अवस्थाले हिंसाको अवस्थाको फेरि आउदैन भनेर विश्वस्त हुने अवस्था छैन। उनीहरु अहिलेको परिस्थितिलाई यसरी चित्रण गरेका छन् कि आगाडि बढिरहेको राजनीतिक परिवर्तनको कमजोरीमामा हिंसा अन्तरनिहित हुन्छ। र विभिन्न समूहका प्रतिद्वन्द्वी माग र विश्वासलाई जोड्ने संस्था स्थापित गर्नु आवश्क छ। द्वन्द्वको संभावाना त छदैछ तर पनि यो खुलारुपमा आउनु बाँकीनै छ कि राजनीतिक प्रक्रिया संविधान निर्माणमा छ जसद्धारा स्वार्थको रक्षा हुन्छ। पत्रकारहरुले के कुराहरु पहिचान छ भने यहाँ धरै किसिमका लुकेका र संरचनात्मक द्वन्द्व छन्:

- समाजिक विभेद
- शक्तिको असमान वितरण
- रम्बार दिर्घकालीनरुपमा बाधामधर्म मानेर
- आधारभूत आवश्कताबाट वञ्चितिकरण
- जीविकाको लागि वितरणमा नियन्त्रण
- निश्चित समाजिका समूहको विरुद्धमा संस्थागत पक्षपात
- राजनीतिक प्रणालीको अति केन्द्रीयता
- आफनो इच्छा अभिव्यक्तिको लागि अवसरको अभाव
- निश्चित समूहलाई सांस्कृतिक पक्षपात
- परम्परागतरुपमा कमजोर समूहलाई समानता दिन अस्वीकार
- गरीबी र अशिक्षा

संचारकमीहरुले के पहिचान गरेका छन् भने विद्मान युद्धबिराम एउटा अवस्था हो। यो त्यतबेलामात्र स्थायी परिवर्तन हुने छ जब जसको कारणले द्वन्द्वका कारण विवाद र असहमतिहरु सबै पक्षको सन्तुष्टी हुनेगरी समाधान गरीन्छ।

संसारमा एकदमै कमै कानूनी संस्था छन् जसले कुनै समाजिक समूह माथि विभेदका स्वरुपहरुलाई संस्थागत गर्दछन्। वास्तवमा धेरैले यस्ता भेदभावका स्वरुपलाई स्पष्टरुपमा गैहकानूनी घोषणा गर्दछन्।

तर जहाँ पनि परम्परामा आधारित विभेदलाई सच्चाउन कानूनी प्रणाली असफल भएका हुन्छन्। यसको कारण संस्थागत कमजोरी हो किनकी समाजका प्रभावशाली समूहहरु संस्थालाईनै अवमूल्यन गर्दछन्।

सामान्यतया पत्रकारहरुले समाचार तयार गर्दा लुकेको हिंसा प्रति सजग र संवेदनशील हुनुपर्छ। यसतो प्राय, द्वन्द्व पछिका समाज जहाँ युद्धविराम भएको हुन्छ तर वास्तविक शान्ति आइनसकेको हनछ।

यस्ता लकेका द्वन्द्वहरु लामो समय सम्म सुसुप्त अवस्थामा हुन्छन् एक्कासी कुनै असम्बद्ध घट्नामा भौतिका रुपमा विस्फोट हन्छन्। भौतिक हिंसाको अन्त गर्न सम्भव हुदैन सांकृतिक र संरचनात्मक हिंसालाई वेवास्ता गरेमा।

संचार व्यवासायीहरु द्वन्द्व पछिको निर्माणको जटिलता संग ठूलो संघंर्ष गरिरहेका हुन्छन् किनकि यस्तो अवस्थाका विश्वास, आत्मबल र मर्यादा सबै गुमिसकेका हुन्छन्। यस्तो समस्याले सामाजिक सेवा, संयन्त्र, नेतृत्व र मनोबैज्ञानिक स्वास्थ्यमा ठूलो आघात पारेको हुन्छ।

राजनीतिक दलका नेताहरुले द्वन्द्वकालमा एक अर्कामा भएका प्रतिकूलात्मक सोचहरु त्याग्न बाँकी नै छ। त्यस्तै क्षेत्रीय संगठन, अर्न्तराष्ट्रिय दातृ निकाय, कुटनैतिक मिशन र नागरिक समाजका अगुवाहरुको भमिकाले सहज सम्मानजनक वातावरण अनुभव गर्न बाँकी नै छ।

पत्रकारकारहरु लुकेको द्वन्द्वको व्याख्या गर्नको लागि चाहिन्छ ताकि त्यो व्याख्या बहुआयामिक, परिस्थितिको जटिलता संग उपयुक्त हुन्छ। वास्तवमा जब संचारले द्वन्द्वलाई एक भन्दा बढी तवरले द्वन्द्वको प्रकृतिलाई देखाउछन् त्यस पछि दर्शकहरुमा समाधानका संभावना पनि त्यति जीवित हुन्छ।

त्यसैले पत्रकारहरुले द्वन्द्वको व्याख्या गर्दा धेरै समूह र दृष्टिकोण खोज्नु पर्छ। उनीहरुले केवल पुरानो पीडा दाहोरयाउनु हदैन। उनीहरुले कुन पक्षले द्वन्द्वलाइ समाधान गर्ने दिशा तिर उन्मूख छन् र कुन यसलाई निरन्रता चाहान्छन् भन्ने कुरा पहिचान गर्नु पर्दछ। यसता कुरालाई स्पष्ट लेख्नु पर्दछ। पत्रकारहरुले भिन्दा भिन्दै पृष्ठभूमि, संस्कृति, चाहाना भएका मानिसहरुलाई भेट्दा व्यावासायिक र व्याबाहारिक सीप सिक्नु पर्दछ जसको सहायताले कुनै गल्ती विना व्यवहारबाट विचार बुझ्न सकियोस्।

## खड्कीएको कार्यान्यनको अभ्यास

राज्यले उपलब्धगराएको सुरक्षा प्रभावकारी हुन नसक्दा पत्रकारहरु अझ असुरक्षित वन्दै गइरहेको छन। सशत्र अपराधिक समुहहरुको विरुद्ध जन सक्ने स्थिती नरहेकोले पत्रकारहरु त्यसता आपराधिक समुहहरुको अगाडि झुक्न वाध्य छन। त्यसमाथिपनी विशेषगरी तराई क्षेत्रमा केहि पत्रकारहरुले पत्रकारीताको धर्मको विरुद्धमा आपराधिक समुहसंगको मिलेमतोमा अप्रत्यक्षरुपमा चन्दा संकलन,अपहरण तथा कठको अवैध तस्करीम संलग्न भएको पाइएको छ।

सवेक्षणका सहभागिहरुले यस्तो अवस्थामा भारत मणिपुरका पत्रकारहरुले संगठितरुमा सन २००१मा ल्याएको पत्रकारहरुको आचारसंहिताको महत्वपुर्ण उदाहरण भएको राय कुरा व्यक्त गरे।

उक्त आचारसंहितामा समाचार संप्रेषणको क्रममा संपादकिय स्वतन्त्रता पाउने तथा सहि समाचार संप्रेषणको क्रममा संचार माध्यमलाई वाधा पुऱ्याउन नपाइने लगायतका जटिल उद्देश्यहरुको मिश्रण रहेको छ।

संचार माध्यमहरुको पहिलो चुनौति भनेको कुन चहि विषय संचार माध्यममा प्रचार प्रसार गर्न योग्य छ भनी पत्ता लागाउनु हो। समाचार मा संप्रेषित प्रत्येक भनाइ तथा दावीहरुसंग सहमत हुने श्रोतहरु खुलाउन आवश्यक पर्छ। श्रोतहरुको विश्लेषण गरि संपादकले समाचार कतिको सहि छ भनी प्रकाशनको लागि निर्णयमा पुग्न सजिलो हुन्छ। पत्रकार सम्मेलनको निम्तोमा पनि श्रोत स्पष्टरुपमा खुलाएको हुनु पर्छ। प्रेस वक्तब्य पनि संवन्धित ब्यक्तिले स्पष्टरुमा सहि गरेको तथा जारी गर्ने संगठनको कार्यालयको छाप हुनु जरुरी छ। पत्रकार सम्मेलनको निम्ता तथा प्रेस वक्तब्य सम्वन्धित संगठनले मात्र वितरण गर्नु पर्छ कुनैपनि अवस्थामा पत्रकारहरुले कुनै राजनितीक पार्टी वा कसैको तर्फवाट वितरणको जिम्मा लिनु हुदैन।

नेपालको परिपेक्षमा नेपाली पत्रकारहरु वाध्यता वा रहरले प्राय विभिन्न राजनितीक समुह तथा भुमिगत शसस्त्र समुहको मागलाई प्रचार प्रसार गर्ने गरेको पाइन्छ। यस्ताखालका प्रवृती तथा विषय वस्तु सार्दभिक भएको सर्वेक्षणमा सहभागिहरुले वताएका थिए। मणिपुर आचार संहिता अनुसार, यदि कुनै विषयमा कुनै संगठनले दुई प्रतिद्वन्द्वी दावीहरु समानरुमा अगाडि ल्याएमा त्यसलाई सम्पादकले आफनो वुद्धि प्रयोग गरी दुवैलाई समान स्थान दिन सक्छ। यदि त्यो दावी मा कसैको जिवन माथि खतरा पर्ने वुझिएमा सम्पादकले त्यो वाक्यलाई काट्न सक्ने अधिकार दिइएको छ। कसैको व्यक्तित्वमाथि असरपार्ने गरि लेखिएको तथा प्रसारण गरिने विषयवस्तुका संवन्धमा सम्पुर्ण संचार सस्थाहरुले भारतीय प्रेश काउन्सिलले जारी गरेको आचार संहिता पालना गर्नु पर्छ। सम्पादकलाई यस्ता खालका समाचार सम्प्रेषणमा कति छुट दिने, कति हटाउने भन्ने कुरामा पुर्ण अधिकार हुन्छ।

यदि कुनै समाचारले समुदायीक एकता माथि खलल पुग्न सक्ने देखिएमा सम्पादकले समाचारमा भएका यस्ता वाक्य, वाक्याङ्स तथा अनुक्षेद नै हटाउनु सक्ने अधिकार छ। समाचारमा प्रकाशित कसैलाई चित्त नवुझेका साना तिना कुराहरु सम्वन्धित समाचार संस्थाको सम्पादकलाई पत्रलेखि सुल्झन सक्छ। कसैलाई कुनै समाचार प्रति चित नवुझेमा मणिपुरमा भाएका पत्रकारहरुको संगठन अखिल मणिपुर श्रमजिवी पत्रकार संगठनमा सम्पर्क राख्न सक्ने छ। यस स्थिानीय संगठनले पारिदर्शी ढंगले आवश्यक मान्यता र मापदण्ड अनुरुप कुनै समाचार प्रति रहेको आपत्तिको निराकरण गर्छ। यदि समाचरमा आचर संहिताको उल्लंघन गरेको पाइएमा आवश्यक कानूनी पक्रिया अगाडि बढाउछ। तर मणिपुर आचार संहिताको समस्या भने बारम्बार भइरहने आचार संहिताको उल्लंघन रोक्न बढी ध्यान दिनु हो। अर्को प्रमुख समस्या भनेको सरकार तथा मणिपुरमा कार्यरत सुरक्षाकर्मीको निस्क्रियता हो। तर यसता समस्याहरु नेपालमा छैनन्। यसको लागि अनुकूल न्यायिक वातावारण जसअनरुप देश चलिरहेको छ यस्लाई धन्यवाद दिनै पर्छ।

नेपाल प्रेस काउन्सिलले पनि पत्रकारिता सम्बन्धि आचार संहिता जारी गरेको छ जस्मा नेपाल पत्रकार महासंघले पनि आचार संहितामा हस्ताक्षर गरको छ। तर आचार संहिता लागू गर्न नसक्नुमा संचार संस्थाका मालिकहरु त्था संबन्धित अन्य संस्थाहरुको असहयोग प्रमुख छ। नाफा कमाउने उद्देश्य तथा राजनीतिक झुकाव पत्रकारिताको व्यावासायिक स्तर संग द्वन्द्धरत छ। नेपालको संक्रमणकालसंगै नेपाल पत्रकार महा संघले आफना चुनौतिहरु जध्दै आचार संहिताको पूर्ण पालना गराउन संघर्षरत छ।

आइ.एफ.जे. एउटा गैह्रसरकारी संस्था हो जुन नाफा कमाउने क्षेत्रमा नलागी, अन्तराष्ट्रिय रुपमा प्रेस स्वतन्त्रताका लागि सदैव लडिरहेको छ र यसले सामाजिक सुरक्षा विकासका लागि स्वतन्त्र र अरुमा निर्भर नहुने पत्रकारहरुको ट्रेड युनियन निर्माण गर्दछ। आइ.एफ.जे. एसिया प्यासिफिकले एसिया प्यासिफिक क्षेत्रमा भएका कार्यहरुको समन्वय गर्दछ। आइ.एफ.जे. ले संयुक्त राष्ट्र संघ, युनेस्को, ओएचसिएचआर, डब्ल् आइ पि ओ, आइ. एल.ओ, रेडक्रसको अन्तराष्ट्रिय समिति, युरोपियन युनिएन, काउन्सिल अफ युरोप र अन्य थुप्रै अन्तराष्ट्रिय ट्रेड युनियन र स्वतन्त्रताका लागि लड्न संस्थाहरुसँग नजिक रहेर सहकार्यको हात अगाडी बढाउँदै आएको छ।

**Visit asiapacific.ifj.org or www.ifj.org for more information.**